# धुलीकोट राज्यको ऐतिहासिक सर्वेक्षण

- प्रा. डा. राजाराम सुवेदी

## परिचय

वर्तमान नेपाल अधिराज्यको अछाम, दैलेख, सुर्खेत, कैलाली तथा बर्दिया जिल्लाका बीचमा उत्तरमध्यकालमा एउटा बाइसी राज्य अस्तित्वमा आएको थियो, जसलाई धुलीकोट भनिन्थ्यो । शाही बर्दिया राष्ट्रिय निकुञ्जबीचबाट कर्णाली चीसापानी पुल तरेपछि उत्तरपश्चिमतर्फ लागी उकालो भिरालो बाटो चढेर ३ घण्टा हिंडेपछि धुलीकोट भन्ने ठाउँमा पुगिन्छ ।[1]

## भौगोलिक परिचय

वर्तमान नेपालका ७५ जिल्ला मध्ये कैलाली जिल्ला सुँगुरखाल गा.वि.स. वार्ड नं. ८-९ मा एउटा ऐतिहासिक भग्नावशेष छ जसलाई राजकाँडा धुलीकोट भनिन्छ। धुलीकोट तराईमा ठोकिएको पहाडी किल्ला हो । बर्दिया शाही राष्ट्रिय निकुञ्जको कर्णाली चीसापानीबाट र बडचौर लम्कीबाट पनि धुलीकोट जाने बाटाहरु छन् । पहाडी धूरीमा त्यो प्राचीनकोट किल्लाका साथै विभिन्न ऐतिहासिक अवशेष रहेको कुरा स्थलगत अध्ययनबाट जानकारी भएको छ । धुलीकोटबाट कर्णालीनदी लगायत सुर्खेतका ठाउँहरु र हिमालय देखिन्छ भने दक्षिण तराईखण्ड छर्लङ्ग देखिन्छ । त्यो ठाउँ अत्यन्त रमणीय छ ।

## धुलीकोट नामकरणका आधारहरू

धुलीकोटलाई डाँडादरा सुर्खेत र कैलाली बडाचौरबाट हेर्दा घरको धूरी त्यसलाई धुरीकोट धन्दा भन्दा धुलीकोट भयो ।

धुलीकोटमा गर्मि महीनामा तुँवालो नलागी उज्यालो देखिने र त्यहाँ राजाको कोटघर हुनाले डोटेली अछामी भाषिकामा उज्यालोलाई धौल भनिने र कोट पनि हुँदा धौलकोट भयो अनि भन्दा भन्दा धुलीकोट भयो ।

धुलीकोटे राजा दुल्लूका पञ्चज्वाला वैश्वानरको शाखा हुनाले र धुलेश्वर महादेवका भक्त भएबाट निजलाई धुलेश्वरकोटे राजा भनिन्थ्यो । त्यसो भन्दा भन्दा धुलेश्वरबाट धुलीकोट भन्न थालियो ।

धुलीकोट सोझै तराईसँग जोडिएको हुनाले तराईमा चल्ने तातो हुरी (लु) चल्दा धुलीकोटको जंगल नै झुक्दछ । त्यहाँबाट तराईमा उडेको धुलो हेर्न सकिने भएकोले धुलो हेर्ने कोट भन्दा भन्दै धुलीकोट भयो ।

धुलीकोटबाट दिनभर र जुनेलीरातभर धवलागिरि हिमालयखण्डको दर्शन पाइने हुँदा धवलकोटबाट धुलीकोट भएको हो ।

## धुलीकोटबाट सञ्चालित पुराना बाटाहरू

१. **महेन्द्र राजमार्गको लम्कीबाट उत्तर लाग्दा धुलीकोट पुगिने ठाउँहरू :**

   लम्की-वर्गदाहा-थारुजाला-खारेपानी-आमपानी-चेप्टेढुंगो-माल्चना-जूतेशुली-लामागडा-गैह्रीगाँउ-मेहेलडाँडा-कोल्बोट-धुलीकोट ।

२. चीसापानी - दानीभीर - थाक्रेसल्ली - धुलीकोट ।

३. धुलीकोट- कुहिंने - गुटू - सुरखेत - दैलेख - महावौको लेक - रानीमत्ता - जुम्ला - हुम्ला - यारी - ताक्लाकोट ।

४. **दानवभूतल (दानुवातावलः** शाही बर्दिया राष्ट्रिय निकुञ्जभित्र) - चीसापानी डाँडादरा धुलीकोट - गुटु - सुरखेत - दैलेख - जुम्ला सुनारगाउँ - हुम्ला - धारी - तिब्बेत व्यापार मार्ग ।

## धुलीकोट ऐतिहासिक अवशेषहरू

### १. टुँडीखेल

धुलीकोट राज्यमा शिपाहीहरुलाई कवाजत खेलाउने मैदानलाई टुँडीखेल भनिन्थ्यो । त्यो ठाउँ ६ रोपनी जमीनमा फैलिएको छ । हाल सो टुँडीखेलमा कोदो, फापर मकै लगाउने गरेको छ । तसर्थ चारैतिर परखालले घेरेर खण्डखण्डमा बाँडिएकोले त्यो विरुप भएको छ । धुलीकोट दरबारबाट पश्चिमोत्तरतिर पर्ने टुँडीखेलले मध्यकालमा महत्व राख्दथ्यो । त्यसिको लम्वाई ३०० हात र चौडाई १२५ हात छ । (१ हाल = १.५ फूट) ।

### २. दरबार क्षेत्र

धुलीकोट राज्यको दरबार क्षेत्र ३ रोपनी जमीनमा फैलिएको छ । दरबार चारआना जमीनमा फैलिएको खण्डहररुपमा छ । दरबार वरिपरि समथर जमीन छ । दरबारको परखाल ३ फीट मोटो र ४४ 'लम्बाई १३' चौडाई छ । दरबारबाका चारैतिर ढोका छन् र ३ फीट जगसंम ढुंगा र माथि ईटाको परखाल हाले ३ तले भएको बुझिन्छ । त्यसको छाना झिंगटीको थियो । सो भवनदेखि केही पूर्वतर्फ गोलबैठक घर २०×६ हात र अर्कातिर अस्तवल अनि १०५ हात समथर जमीन रहेको छ ।

धुलीकोट दरबार पर्खालमा प्रयोग भएको जगमा ढुंगा एकै नापको छैन तापनि जग माथिका ईटा ७×४×२" ५ । झिंगटी ८×३×१' ५ । त्यहाँ पुग्दा देहरादूनको नालापानी किल्ला हो कि जस्तो लाग्दछ । बचिनेकाले त धुलीकोटको दरबार क्षेत्र पत्ता लगाउन गाह्रो पर्ने हुँदा स्थानीय मानिसलाई साथमा लिएर जानु पर्छ । त्यहाँ सुरक्षाको प्रबन्ध नहनु पनि अर्को कारण छ ।

### ३. भैरवस्थानः

हालको कैलाली जिल्ला सुंगुरखाल राजकाँडामा एउटा प्राचीन देवताको स्थान छ । त्यसलाई भैरवस्थान भन्दछन् । ३.५ रोपनी कोदावारीको चौपाटे जमीनको उत्तरतर्फ गीठाको रुख छ, त्यो रुखमुनि जग्गानाथ (जगन्नाथ) को मन्दिर छ । भैरवस्थान र र जगन्नाथका स्थान नजिकै छन् । भैरवस्थानमा शयौं त्रिशूल र घण्टहरु चढाइएका छन् भने जगन्नाथका खोपामा १०-१२ वटा प्राचीनकालीन माटाका घोडाहरु चढाइएका छन् । ती घोडाको नाप १×१' फूट छ । कालक्रमले ती घोडामा झ्याउ उम्रेको र खैरा रङबाट नीला रङका भएका छन् । भैरव देवतालाई कुखुरा, संगुर, बोका र हाँसको वलि पनि दिइन्छ । प्रत्येक वर्ष वडा दशैं र चैतेदशैंमा त्यहाँ पूजाका साथै जात्रा पनि लाग्दछ । भैरव देवताका पूजारी कनफट्टा जोगी हुन्छन् भने जगन्नाथका पूजारी कर्णालीनदीको तट १२ वण्डाल क्षेत्रका राजीहरु हुन्छन् । हाल ब्राह्मणद्वारा पनि विधिवत् पूजा गर्न थालिएको छ । राजीलाई त्यहाँ पूजा गरेवापत् वर्षेनी प्रति कुरिया २ पाथीधान दिने चलन छ । जगन्नाथ स्थानको छेउमा रहेको गिठाको जरा राति बल्छ वा झल्ल उज्यालो हुनाले त्यसलाई उजेली काठ पनि भन्दछन् । आजकल धुलीकोट क्षेत्र वरिपरि वस्तीविहनि हुनाले उजाड जस्तो लाग्दछ ।

### ४. देवीस्थान

धुलीकोटे राजाकी इष्टदेवी कालिका, मालिका, जालपा र विन्द्राशैली (विन्ध्वासिनी) देवी हुन् । धुलीकोट दरबार प्राङ्गणमा दक्षिणपट्टि पश्चिमी चोसोमा देवीको मन्दिर छ । तर यो देवीस्थान त्यहाँ नरहेर मालिका देवी भनेर दरबारदेखि उत्तरतिरको पहाडी भञ्ज्याङमा स्थापना गरिएको छ । त्यहाँ हाल कुनै नियमित पूजा, गुठीको व्यवस्था र मूर्ति पनि नभएकोले मन्दिर भएको ठाउँमा भग्न परखाल मात्र शेष रहेको छ । सो ठाउँमा आजकल धुलीकोटका केही मानिसले माटो र ढुंगा जडानगरी फूसले छाएको सानो मन्दिर निर्माण गरी वडा दशैं र चैते दशैमा पूजा गर्दै आएका छन् । पुरानो मन्दिर भत्कन गएको र मूर्ति पनि हराईसकेको हुनाले त्यो नयाँ मन्दिर बनाएको कुरा त्यहाँका बासिन्दाबाट थाहा हुन्छ ।

### ५. देवल

कैलाली जिल्ला सुँगुरखाल गा.वि.स. वार्ड नं. ९ जूतेशूली निवासी २०५२ मा ७५ वर्ष पुगेका रतिराम मुडभरीको कथन अनुसार बूढीविस वर्ष अघि दूल्लु दैलेखबाट धुलीकोटमा आएका राजाले त्यही पुरानो देवलका छेउ मा आएर मुकाम गरेका थिए भन्ने थाहा पाइन्छ । उनी

त्यहाँ वस्तुको मुख्य तात्पर्य भोटको नून ऊन, सुन र मालमधेशको गुँड, कपडा र तेल उपलब्ध गर्नु नै थियो। वि.सं. १९९८ सालमा सो देवल भत्किन जाँदा स्थानीय वासिन्दाले त्यसको जीर्णोद्वारा गर्न भ्याएनन्। देवलमा प्रयुक्त ढुंगाको बान्की र कला देखिंदा ४-५ शयवर्ष भन्दा पुराना हुनुपर्ने लाग्दछ। देवलको निर्माण विधितथा कलापक्ष अध्ययनलायक छ।

राजकाँडास्थित प्राचनि देवलको मोहडापट्टिको भाग पूर्णत: भग्न छ तापनि देवलभित्रको चतुर्वाहू विष्णुमूर्नि सुरक्षित छ। ४ जनाजति मानिस भित्र अटाउन सकिने देवल २५ फीट अग्लो हुनुपर्ने देखिन्छ। वर्तमानमा ४ फीटमात्र देवलको कलात्मक परखाल सबुतै छ। चौकूने परेको सो देवल राजकाँडाको डीलमा छ र त्यहाँबाट तराईको मोहक दृश्य स्पष्ट देख्न पाइन्छ। समयको गतिसँगै देवलको दक्षिणी पींढी सर्लक्क पैह्राले लस्काएको छ। देवलको भित्री भाग ६×६ फीट छ भने देवलको गजूर पनि भित्रै मिल्कन गएको छ, जसलाई एकजनाले कष्ठसाथ उचाल्न सकिन्छ। चतुर्वाहू विष्णुको मूर्ति २.५' अग्लो, १.५' चौडा र .५' मोटो छ। देवलभित्रै अछाम विनायक, दुल्लू भूर्ति, मान्मा र सुरखेतको काँक्रे विहारका देवलहरुमा उपयोग गरिएका कलापूर्ण शीलाको प्रयोग भएको छ। त्यसरी विचार गर्दा धुलीकोट अजयमेर र काँक्रे विहारको समकालीक ठहर्छ। त्यस्तो कसरी हुन आयो भन्ने कुरा ऐतिहासिक विवेचना गर्नु सान्दर्भिक हुनेछ।

प्राचीनकालदेखि नेपालको एकीकरणसम्म र पछि पनि धुलकिोटको बाटो तिब्बत छिर्ने ताकलाखारसम्म व्यापारमार्ग सञ्चालित थियो। वर्तमानबालमा बर्दिया राष्ट्रिय निकुञ्ज चीसापानीभित्र गाइने काँडा दक्षिणतर्फ तराई र पहाडी फेदीमा एउटा पोखरी छ जसलाई दानुवाताल भनिन्छ। प्राचीनकालीन सार्थवाहको दानवभूतल पनि त्यही हो। दक्षिणपट्टि चल्ने व्यापारकेन्द्र त्यही दानवभूतलमा थियो। त्यतैबाट कोठियाघाट, गोलामण्डी, कतर्नीया, लखिमपुर, रानीगञ्ज, अमीलिया जस्ता बजारहरुमा अछामी अलैंची, जुम्ली कस्तूरो, हुम्ली बाज र बाजुराको काम्लो पुग्दथ्यो। ती क्षेत्रहरु पहिले दैलेख अन्तर्गत पर्दथे। दानवभूतलबाट - सर्खोल - गोरंगे - धुलीकोट - जोताशूली - चनौट - कुइनेघाटबाट कर्णालीनदी तर्ने - ज्यामूघाटबाट भेरी तर्ने - वावियाचौर - लखर्पाटा - डूँगेश्वर-दूल्लू-दैलेख-महावौकोलेक-जुम्ला। त्यसैगरी गोलाघाटबाट-कटाछे-चीसापानी - कुइनेघाट - गुटू - जंगलघाट - असराघाट - कर्णाली-तुल्ला-तील्तडा-खूलालू-यागिलघाट (कालीकोट) - सान्नीगाड - फूग्गाड - थिर्पुको जाडबोट - कोल्टी। त्यस्तैगरी दानुवा तालबाट - गाइनेकाँडो - राजकाँडो - तुनेपगार - फूर्केसल्लो - मुकुरमाला - नर्सिङकाँडा - लेकगाँउ - हर्रेकाँडा - डोप्का - तेलपानी - मुग्राहा - रानीघाट - फलाँटे - आमडाली - सुरखेत पुग्दथ्यो। यसरी त्यो धुलीकोटको देवल प्राचीन सभ्यता तथा वाणिज्यमार्गमा रहेको कुरा बुझिएको छ। धुलीकोटले प्राचनि व्यापारमार्ग प्रदान गर्दथ्यो।

**६. रानीकूवा : पानीपँदेरो**

धुलीकोट दरबार क्षेत्रको पूर्वोत्तरकोणमा वा टुँडीखेलदेखि पश्चिमोत्तर कोणमा २०० मिटर उत्तरी भित्तामा हाल पुरिएको अवस्थामा एउटा पुरानो वापि वा कूवा रहेको छ। त्यही कुवाको केही माथिपट्टि एक देवल भग्नावस्थामा रहेको छ। स्मरण रहोस्, टुँडिखेलबाट र दरबारबाट गरी दुईतर्फबाट त्यहाँ पुग्न सकिन्छ। हाल त्यहाँ पुग्ने पुरानो गोरेटो बाटो पनि भेटिएको छ र कूवाको दक्षिण-पश्चिमतर्फ २५ वटा ढुंगाका सिंढीहरु यथावतै छन्। हाल पानी सुकेको ३ 'गहिरो ६×६' लम्बाई चौडाई भएको कूवालाई चप्लेटाढुंगाको ढक्कन राखिएको छ।

धुलीकोट दरबारको पानी पंदेरोको आकृति पहिराले पुरिई चिन्नै नसकिने स्थितिमा रहेको छ। कूवाभन्दा माथिको देवलले स्नानपछिको जलचढाई पूजा गर्ने परम्परालाई संकेत गरेको छ। उत्तरतिर मात्र परखाल शेष रहेको मन्दिर ८×८' चौकुने छ भने पर्खाल २.५' चौडा छ। चप्लेटा ढुंगाले पाट हाली बनाएको सो देवलमा शिवलिङ्ग स्थापित हुन्थ्यो। तापनि हाल त्यहाँ कुनै निशान छैन। स्थानीय निवासी रत्नसिंह के.सी. र राजेन्द्र मुढभरीको अनुसार सो कूवालाई रानीकूवा भनिन्थ्यो र धुलीकोटको राजपरिवारले त्यहाँको पानी पिउने कुरा पनि निजहरुबाट सुन्न पाइन्छ। आजकल धुलीकोट क्षेत्र जंगल क्षेत्रको रुपमा परिणत हुँदै गएको छ। वस्ती पनि त्यहाँ ज्यादै अव्यवस्थित र पातलो छ।

**७. ओखलहरू**

अन्य वाइसी चौबीसी राज्यका कोटमा झैं धुलीकोटमा पनि वस्ती प्राचिनकालदेखि रहेको कुरालाई दुइवटा ठूला ओखलहरुले पुष्टी गर्दछन्। पहिलो ओखल २' गोलो र

१' गहीरो छ भने अर्को २' गोलो तथा २' नै गहीरो छ। त्यसको प्रयोजन धान कुट्न, पीठो कुट्न र महत्वपूर्ण वस्तुहरु राख्नमा गरिन्थ्यो । ओखल भएका ढुंगाहरु हेवानका छन् । साना-साना ओखल त दरबारको सेरोफेरोमा दर्जनौं छन् ।

## ८. खजाने ओडार




धुलीकोट दरबारबाट पश्चिमतर्फको पहाडी पत्थरे ढिस्को माथि ढुंगाकै चेपबाट एउटा ओडारपरेको ठाउँ छ । हाल त्यो ठाउँ जंगली लहराले जेलेको छ । चूचूरोमा पुगेपछि एक प्राचीन भग्न कोतघरको पर्खाल देखिन्छ । त्यो भग्न कोतघरको नैऋत्यकोणमा १ पुरुप गहिरो खाडल छ । पुरिएको सो खाडल पहिले तल्लो ओडारमा मिसिने सुरुङ थियो ।

धुलीकोट पश्चिमको कोतघरबाट खनिएको त्यस ओडार भित्र धुलीकोटे राजाका हात हतियार खजित थिए । हालैमा त्यस ओडारबाट १ चाँदीको झारी, १ तरवार, १ खूँडा, १ ढाल र एक छाप्री चोरी भएको भएपनि चोरहरु निराश भएको कुरा स्थानीय वासिन्दाहरु बताउँछ । दूर्भायवशः ती चोरहरुमध्ये एकको कर्णाली तर्दा डूँगाबाट खसेर कर्णालीले बगाएर लाशै गायव भयो ।

खजाने ओडार भन्नाले मामुली ओडार जस्तो मात्र लागने त्यो सुरुङ प्राचीन इतिहासको धरोहरको रुपमा रहेको छ । प्राचीन राज्यका कोटहरुमा त्यस्ता ओडारहरुबाट छापामार युद्ध सञ्चालन हुन्थ्यो त कुनै सुरुङबाट पानी खेप्न र युद्धको शंकटबाट पलायन गर्न प्रयुक्त हुन्थ्यो ।

उदाहरणको लागि उकूकोट, सुडौडकोट, अजयमेरकोट, दीपायल, पांडवगुफा, विलाशपुर दुल्लूहाट, काँक्रेविहार, सुनीकोट र बज्रेश्वरकोटका प्राचीन सुरुङहरुलाई लिन सकिन्छ। मध्यकालीन सभ्यतामा त्यस्ता सुरुङ तथा ओडारको महत्व सामरिक रुपको रहने कुरा प्राय: कोटहरुमा पाइएबाट स्पष्ट बुझिन्छ।

**९. हात्तिसार**

धुलीकोटे राजाले आफ्नो दरबार प्राङगणमा तराईबाट हात्तिखेदा गरी हात्ति समाती धुलीकोटसम्म लगेका थिए। धुलीकोटको दक्षिणतर्फ हात्ति बाँध्ने ढुंगो यथावतै छ। सो ठाउँलाई हात्तिसार भनिन्छ। हात्ति जस्तो जनावर उकालो नचढ्ने हुँदा धुलीकोटमाथि हात्ति चढाउनु सहज थिएन। तसर्थ घुमाउरो बाटो (आजकल गाडीको बाटो बनाए झैं) जस्तै: लम्की - वर्गदाहा - थारुजाला - खारेपानी - आमपानी - चेप्टेढुंगो - मेहेलडाँडा - कोल्बोट - धुलीकोट। त्यसैगरी चीसापानीतिरबाट क्रमश: चीसापानी - दानीभीर - थाँक्रेसल्ली - धुलीकोट आदि ठाउँबाट हात्ति हिड्न सक्ने बाटो काटिएको थियो। पछिसम्म पनि धुलीकोटे राजाका दरबारमा पहाडी राजाहरु शीकार तथा हात्तिखेदा गर्न ओइरो लाग्थे। नेपालको एकीकरणपछि २००७ सालसम्म पनि "चीसापानी चौतारिया" कहाँ शीकार गर्न जाने परम्परा यथावतै कायम थियो। हात्तिखेदाको प्रयोजन त्यसै कुरामा थियो।

**१०. निशाने ढुंगा**

**धुलीकोट दरबार र खजाने गुफाको बीचमा भञ्ज्याङ परेको छ, जुन ठाउँमा ५ वटा अँगाला भरिका १ पुरुष अग्ला ढुंगाहरु गाडिएका छन्। ती ढुंगालाई निशाने ढुंगा भनिन्छ। धुलीकोटे राजा तथा भारादारहरुले चाँदमारी गर्नको निम्ति निशाने ढुंगा गाडिएका हुन्थे। ती ढुँगा वरिपरि अनावश्यक मानिसहरु जान निषेध गर्नको लागि पनि निशाने ढुंगाको प्रयोजन ठानिन्थ्यो। ती ढुंगाहरु अद्यापि यथावत उभिएकै रुपमा प्राचीन युद्धकालको साक्षि बनेका छन्।**

**११. हात्तिढुंगो**

धुलकोट दरबारबाट वायव्यकोणतिर एउटा हात्तिभन्दा ठूलो हात्तिकै जस्तो आकृति परेको ढुंगो छ। पूर्वाभिमुख सो ढुंगो आफै हिड्ने हो कि जस्तो देखिन्छ। राजकाँडा भन्ने ठाउँमा रहेको त्यो ढुंगामाथि बसेर फाकट मैदानमा धुलीकोटे राजाले कवाइत र सरायँ हेर्दथे। सो फाकटचौरलाई हटियाचौर पनि भनिन्छ। त्यसबाट सो ठाउँमा हाटबजार रहेको कुरा पुष्ठी हुन्छ। अन्यत्र भूरे राज्यमा झैं त्यहाँ पनि बजार थियो।

**१२. मेल्डाँडा : जालपादेवी मन्दिर**

धुलीकोटे राजाकी इष्टदेवीको नाम जालपादेवी हो। ती देवीलाई बज्रयोगिनी तथा उग्रतारा पनि भनेको पाइन्छ। धुलीकोट राज्य समृद्ध हुँदा त्यहाँका राजाहरुले आफ्नो दरबार प्राङ्गणभन्दा पश्चिमतर्फ भञ्ज्याङमा एउटा मन्दिरको निर्माण गराएका थिए। पुरानो मन्दिर कुन आकृतिको थियो। त्यो कुरा पत्तो नलागे पनि मौजुद भग्न रुपको नाप १०×१०' र भित्रपट्टि देवीदेवताहरु र विष्णुको पनि मूर्ति स्थापित छन्। सो मूर्ति २.५' अग्लो कालो शीलामा कुँदिएको छ। विष्णुदेखि बाहेक अन्य मूर्तिहरु टूटेफूटेका छन्। त्यसको रहस्य बुझ्न सकिएको छैन र स्थानीय वासिन्दालाई पनि त्यसबारे जानकारी छैन। हालमा मन्दिरको छानो नभएको चौतर्फी ३' पर्खालमात्र उभिएको छ। सो ठाउँमा हिमाली शीतल र तराईको न्यानो दुवै अनुभूति हुन्छ।

**१३. खेत पोखरी : रानीपोखरी**

धुलीकोटे राजदरबार र देवीथानका साथमा निर्माण गरिएका प्राय: भवनहरु ईटाका हुनाले त्यहाँ तराईको पूर्णत: प्रभाव रहेको देखिन्छ। त्यो ईटाको माटो झिकेपछि त्यहाँ पोखरी आकारको खाडल बनेकोले त्यही आधारमा खेतपोखरी भनिनुका साथै रानीपोखरी पनि भनियो। आजकल वरिपरिबाट भल र पांगो माटोले पोखरी पुरिन गएको हुँदा स्थानीय मानिसले धैया छर्ने पनि गरेका छन्।

**१४. देवीथान**

धुलीकोट दरबार प्राङ्गणभित्रै भग्न देवीको मन्दिर छ। सो मन्दिर पनि ईटाको परखाल छ र छाना झिंगटीको थियो तर हाल भत्केको छ। आजकल पनि गाई बाखाको ग्वालो लागी जानेले मन्दिरको वरिपरि र भित्रपट्टि खोश्रेर पैसा जम्मा गर्ने गर्दछन्। मूर्ति र कलाकृति विहीन सो मन्दिर ज्यादै कलात्मक भएको कुरा स्थानीय वासिन्दाबाट थाहा हुन्छ। मन्दिर २५×४२' घेराभित्र फैलिएको प्राङ्गण पेटीभित्र १०×१०' मा मन्दिर निर्मित छ। मन्दिरको परखाल ३' मोटो हुनाले भूईतलासहित ३ तले भएको हुनुपर्छ। त्यहाँ नित्य घोडासैनी ब्राम्हणहरुले पूजा आरती गर्थे। शक्ति र महाकालीको पूजा हुने सो मन्दिरमा विन्द्रासैनी र भैरव स्थापित थिए।

## १५. धुलीकोटको किल्ला वस्तुकला

धुलीकोट राज्यको दरबारदेखि पूर्वपट्टि एउटा पहाडको धुरीमा मैदानी भाग छ जसलाई टुँडीखेल भनिन्छ । त्यस मैदानलाई दोहोरो परखालले घेरिएको छ। पूर्वदेखि पश्चिमतिर चौडा हुँदै गएको ६०'×४०', उत्तर दक्षिण ४०×२८' फैलिएको छ। त्यस ठाउँलाई किल्ला पनि भनिन्छ  जसको आकृति आँपका कोया जस्तो छ। किल्लाको बनावट भित्री र बाहिरी गरी दुईवटा भन्न मिल्ने प्रकारको छ। बाहिरी किल्लालाई पर्खालभन्दा बाहिरबाट घेराउ जस्तो गरी खाडल खनिएको छ । भित्री किल्लाबाट बाहिरी किल्लाको परखाल ६०' फराकमा छ । त्यसरी विचार गरी हेर्दा टुँडिखेलको लम्बाई १२०' देखि ८०' सम्म छ । मैदानी भागबीचमा समथर भएपनि वरिपरि केही पाल्टे (भीरालै) छ ।

धुलीकोट किल्लामा ईशान्य र आग्नय कोणबाट भूमिगत (सूरुङ) मार्गबाट मात्र जाने बाटो छ। ५९×८' लम्बाई चौडाई नापका सुरुङहरु हाल उदाङ्गै परेका छन्। खाडलभित्रबाट पनि सुरुङ हुनु यो किल्लाको महत्वपूर्ण पक्ष मानिन्छ ।

धुलीकोट किल्लाका २ सुरुङमध्ये उत्तरी सुरुङबाट पानी र दक्षिणी सुरुङबाट खाद्यान्न र हातहतियार भित्र्याइन्थे । उत्तरी सुरुङदेखि २०० मिटर उत्तरमा रानीकूवा पर्दछ। धुलीकोट किल्ला पर्खाल कति अग्लो थियो भन्न सकिएको नभएपनि हाल ३×३' अग्लो र चौडाई रहेकोमा उचाई बढ्तै हुँदो हो भन्न सकिने ठाउँ छ। किल्ला निर्माणमा शीप लगाइएकोसुरुङ निर्माणमा रणकुशलता र सामरिक दूरदर्शीतालाई ध्यान दिइएको देखिन्छ। किल्ला वरिपरिको खाडल कति गहिरो थियो भन्न नसकिए पनि १२' लामो र ८' गहिरो भएको अनुमान गर्न सकिन्छ। किल्लाको चौदिशामा चियो गर्ने ठाउँहरु थिए ।

## १६ कुहिनेघाट (सुनधुने ठाउँ)

धुलीकोटको कुहिनेघाटदेखि चीसापानीसम्म कर्णालीनदीको वेग धीमा भएकोले पुगनपुग ९ किलोमीटरसम्म दुवै तटमा बालुवा चालेर सुन निकाल्ने काम प्राचीनकालदेखि अद्यापि गरिंदै छ। त्यस क्षेत्रमा वैतखेल्न (RAFT) गर्न ज्यादै आनन्ददायक हुन्छ र पौडनु गोहीबाट खतरा। कर्णाली नदी त्यहाँ पश्चिमबाट पूर्वोत्तरतिर बग्छ। त्यही बीचमा कही सुनखानी हुनाले दुवै तटमा कण बग्दा बालुवामा मिली किनारा लाग्दछ। स्थानीय माझी र बोटेले सुन जम्मा पार्दछन्।

## १७. गाइनेकाँडा :[२]

धुलीकोटे राजा बस्ने ठाउँलाई धुलीकोट राजकाँडा भन्ने चलन थियो भने राजाका भाइ र भतिजाहरु बस्ने ठाउँलाई गाइनेकाँडा भनिन्थ्यो । ती दुवै ठाउँको बीचबाट कर्णाली नदी बग्दछ। धुलीकोट भन्दा गाइनेकाँडा उचाईमा छ तापनि धरातल धुलीकोटपट्टि खतराजनक छ। औलोउन्मूलनपछि चीसापानीमा चौतरियाहरुको बस्ती भएको हुनाले त्यही आधारबाट उनीहरुलाई "चीसापानी चौतरिया" भनिन्थ्यो । आजकल पनि ठकुरी र राणाजीका परिवारमा त्यही शब्दावली प्रचलित छ । पछिका पुस्तामा धुलीकोटे राजा निसन्तान भएका हुनाले धुलीकोटको अधिकार गाइनेकाँडा स्थित चीसापानी चौतरियाका हातमा आउथ्यो । तर विविध कारणले चीसापानी चौतरिया सो सहुलियतबाट बञ्चित भएको कुरा पछि चर्चा गरिने छ।

## १८. अपराधी फाल्ने भीर

धुलीकोटे राजाले कस्तो न्याय विरुपण गर्दथे भन्ने प्रमाण पाइएको छैन । जघन्य अपराध गरेको प्रमाणित भएका मानिसलाई कोल्था (भाङग्रो थैलो)मा बाँधेर भीरबाट लडाएर मारिन्थ्यो । एक पटक कुनै निरपराधीलाई सोही ठाउँबाट लडाउँदा धुलीकोटे राजालाई निसन्तान हुने र राज्य उड्ने श्राप गरेथ्यो भन्ने कुरा स्थानीय वासिन्दाबाट सुनिन्छ। सजायँ कठोर हुनाले अपराध कम हुन्थे ।

## १९. बाजथला

धुलीकोटे राजाले धुलीकोटमा ५ वटा बाज छोप्ने थला थापेका थिए। बाज पार्नका निम्ति दक्षिणतर्फ जालि थाप्ने बीचको चौतारीमा परेवालाई बाँधेर राख्ने र आकासबाट बाजले परेवा झम्टेर दक्षिणतिर उड्दा जालमा पर्थ्यो र त्यहाँ बाज समात्ने चलन थियो। त्यो बाज शीकार गर्नमा प्रयोग हुन्थ्यो भने भारततीर लगेर बेच्ने र त्यहाँ मोतीचरा छोप्ने तालिम दिइन्थ्यो । मोतीचरा नीलो रंगको हुने र त्यसले समुद्री पींधबाट शीपी ल्याई मोतीयुक्त शीपी तोडी मोतीलाई सलक्क निल्दथ्यो । त्यो चरा छोपेपछि त्यसका पेटबाट मोती झिकेर चराको मासु बाजलाई दिइन्थ्यो ।

## २०. गादीचौतारा

धुलीकोट राज्यमा नयाँ राजालाई राज्याभिषेक गराउँदा गादी चौतारामा सजाएर जनताका माझमा समारोह गरिन्थ्यो । राज्यमा पर्न आएका मुद्दा मामिला, झैं झगडा,

न्याय अन्याय जस्ता कुराको विवेचना गर्नुपर्दा राजाले गर्दा चौतारामा बसेर फैसला सुनाउँथे ।

आजकल गादी चौताराका राम्राराम्रा छपनीहरु त्यहाँबाट अन्यत्रै लगेबाट नमिल्दा ढुंगा र माटाको ढिस्को मात्र शेष रहेको छ । त्यत्ति ढिस्कोमात्र धुलीकोटे राजाको गद्दी चौताराको सम्झना भएको गराएको छ । गादी चौताराको परम्परा जुम्ला दुल्लू दैलेख राज्यबाट आएको अनुमान गर्नुपर्ने हुन्छ । गादी चौताराले राजा, राजपरम्परा, राजगद्दी, राज्यारोहण, राज्याभिषेक र राजकीय कर्तव्यको संकेत गर्दछ ।

## धुलीकोट राज्यक्षेत्र (चौकिल्ला)

धुलीकोट राज्य अन्तर्गत १२ गाउँ डाँडादरा (खण्ड), १२ वण्डाल (कर्णाली नदीका दुवैतटवर्ति क्षेत्र) १२ मल्लवारा तथा ८ तप्पा (बर्दिया) पर्दथे । ती ८ तप्पाहरु निम्नानुसार हुन् ।[३]

१. भौरा तप्पाका ११ गाउँ (राजापुर, नङ्गापुर, खरानीपुर, पातापहाड, भीम्पुर, खैरीचन्दनपुर, मनाउँ, पशुपतिनगर, मानपुर, टप्रा, बाँशगढी) ।

२. पटुवातप्पा (सूर्यपटुवा, ठाकुरद्वार, भूरीगाउँ र मनुवाको केही भाग) ।

३. मडेरा तप्पा (शिवपुर, न्यौलापुर, बग्नाहा र ढोढरी) ।

४. पदनाहातप्पा (पदनाहा, बनियाबाहाड, धँदरवार र मगरागढी) ।

५. रजहटतप्पा (मोतीपुर, वेलवा, मम्मदपुर, मथुराहरद्वार र खैरापुर) ।

६. छितपकरियातप्पा (गुलरिया, मुम्मदपुरको आधा, मटेरिया र कोठिया) ।

७. फेनातप्पा (मगरागढी र धँधवारका आधा आधा खण्ड) ।

८. रजहरतप्पा (मोतीपुर, बलेवा, डेउडाकला, मैनापोखर र जमुनी) ।

धुलीकोट राज्यको विस्तार पूर्वमा सिम्लेपानी, तेलपानी, पाखापानी, बाँसपानी, मुन्नामकाँडा र धनुवाँसे हुँदै डुड्वानदीसम्म थियो । त्यसैगरी दक्षिणतर्फ मथुराहरद्वारदेखि भारतको लखिमपुर जिल्ला, रानीगञ्ज र अमीलिया जस्ता उर्वर क्षेत्रसम्म विस्तारित थियो । यसको उत्तरमा सिम्लेपानी, सुर्खेतखाल्टो, तरङ्ग भेरीनदीको साँध थियो भने पश्चिमपट्टि धुधुरपानी, गुटू, कोटगाउँ, बाँफविसौनी, बेतान, लगाम र बलाँता (अछाम) सम्म पसारिएको थियो ।[४]

## स्थापनाकाल

धुलीकोट राज्यको स्थापनाकाल सम्बन्धमा स्पष्टसँग जानकारी पाइएको छैन । माथिकै प्रशंगवश यसको स्थापना बूढीबिस वर्ष पहिले भएको कुरा पुनः सम्झनुपर्ने देखिन्छ । सुदूरपश्चिमाञ्चलीय भाषिका अनुसार बूढीबिस शब्दले २०×२०=४०० जनाउँछ । तसर्थ वि.सं. १९९०-४००=१५९० ताका धुलीकोट राज्यस्थापना भएको मानिएको छ । लगभग गण्डकी र कर्णाली प्रश्रवण क्षेत्रमा यही घडिमा भूरे राज्यहरुको स्थापना क्रमसँग मिल्दो हुनाले पनि बूढाहरुको कुरामा सहमति गर्ने[५] ठाउँ रहेको छ । पछि प्राप्त प्रमाणले पुष्ठी नगर्दासम्म यही मानक राख्नुपर्ने स्थिति परेको छ ।

## आदिवासी र राजवंश

धुलीकोट राज्य आवाद गर्नेहरुमा खसमगर र थारुहरुकै बाहूल्य थियो र कालान्तरमा आले, मास्की, सिजा, गुरुङ्ग पनि थपिए । खसहरुमा सावद, वण्डालक्षेत्रमा मलाहा, पहाडमा बूढा, चलाउने, जप्रेल, सामन्तहरु थिए भने रावल, मूढभरी, घोडासैनी, बझगाईं र निरौलाहरु पनि गनिन्छन् । बर्दिया र कैलाली भरमा घना अटक जंगल हुनाले ४ कोशतल्ला खण्डमा थारुको वस्ती थिए ।

धुलीकोट राज्यको राजवंश दुल्लू, दैलेख राजवंशकै शाखा हो । दुल्लू राज्यको स्थापनाकाल वि.सं. १४५३ मा भएको हो ।[६] त्यहाँका पहिला राजा मनैवम्म हुन् । राजा मलैवम्मका जेठा छोरा (रौतेला) सुमेरुवम्मले दुल्लूराज्य अंश (आँसो) पाए । कान्छा संसारवम्मले भने दैलेख । उनै संसारवम्मका छोराहरु श्रीवम्म र जितारीवम्म भए । ती कान्छा जितारीवम्मलाई धुलीकोटमा अंश दिंदा छुट्टै राज्य भयो । तर जितारीवम्म दैलेखमै बसेका हुँदा उनका छोरा प्रभात रायलाई सर्वप्रथम धुलीकोट पठाइयो । त्यसैले उनलाई (राया=राजा) राजा भनियो । त्यसपछि नेपालको एकीकरणसम्मको वंशावली यसप्रकार छ ।[७]

१. प्रभात राय (अनुमानित १५९० वि.सं.) धुलीकोट राज्यस्थापना गर्ने) ।

| | | | |
|---|---|---|---|
| २. | दामोदरराय | ३. | धर्मराय |
| ४. | अजपति राय | ५. | गजपति राय |
| ६. | जजुपति राय | ७. | भूपति राय |
| ८. | नरपति राय | ९. | कर्णपति राय |
| १०. | शिउमल राय | ११. | भीउमल राय |
| १२. | देवसिंह राय | १३. | दलजीत राय |
| १४. | सुर्ति राय | १५. | कुशल राय |
| १६. | उजित राय (वि.सं.१८४६) । | | |

वि.सं. १५९० देखि १८४६ को नेपालको एकीकरण कालसम्म २५६ वर्ष जति धुलीकोट राज्य स्वतन्त्र रहेको र सरदर एक राजाले १६ वर्ष राज्य गरेको बुझ्नुपर्ने भएको छ। जस्तो कि १८४६-१५९० = २५६ / १६÷२५६=१६ वर्ष राज्यकाल प्रति व्यक्ति। कुनै राजाको राज्यकाल अलि बढ्ता र कुनै अलि कम भएर पनि पृथक विवरण प्राप्त नभएसम्म सरदरमा १६ वर्ष राज्यकाल हुन गयो।

## नेपालको एकीकरणपछिको धुलीकोट राज्य

नेपालको एकीकरण पूर्व धुलीकोट राज्यमा १६ वटा राजाहरुले राज्य गरेका थिए। राजा उजित रायका राज्यकालमा नेपाली सेना पश्चिमतर्फ बढीरहेको थियो। त्यसैबेला दैलेख, प्यूठान, दाङ, छिल्ली तथा धुलीकोट राज्यहरुले एकमत गरी नेपाली सेनाको मुकाविला गर्ने निर्णय गऱ्यो। जुम्लामाथि नेपालको अधिकार भएपछि नेपाली सेनाले दुल्लू तथा दैलेख विजय गर्न हिड्यो। दुल्लूका राजा उत्तम शाही थिए भने दैलेखमा कर्णशाही।[८] दैलेखको विलाशपुरमा ठूलो युद्ध भयो र दैलेखी राजा कर्णशाहीले भागेर ज्यान बचाए। त्यसपछि नेपाली सेना दुल्लूतिर बढ्यो। दुल्लूका राजा उत्तमशाह?ी सहित सारा जनता घर छोडी वनमा लुक्न गए। नेपाली सेनासँग आत्मसमर्पण गरेपनि कुनै हानि नहुने कुरा नेपाली सेनानायकले प्रचार गर्न थाले। त्यसपछि त्यस भेकका मानिस नेपाली सेनासामु आए। त्यहाँका राजा उत्तिम शाहीले नेपाली सेनालाई सहयोग गर्ने वचनबद्धता देखाई आश्रित सन्धि गरे। वि.सं. १८४६ कार्तिक २१ गते दुल्लू नेपालको अधिनमा आयो।

दुल्लू र दैलेखमा नेपालको अधिकार हुनुपूर्व सुरखेततिर नेपाली सेना बढ्यो। सुरखेतमा दैलेख र धुलीकोटको संयुक्त सेनाले नेपाली सेनाको मुकाविला गऱ्यो। कालु पाण्डेको नेतृत्वमा गएको त्यो सेनाले वाइसीको संयुक्त सेनालाई सुरखेतमा पराजीत गऱ्यो। धुलीकोट राज्य अन्तर्गत सुरखेत परेकोले धुलीकोट नेपालसँग त्यही पराजीत भएका कारणबाट नेपालमा मिल्न गयो। वि.सं. १८४६ असोजमा धुलीकोट राज्य नेपालमा विलय भएको थियो। (९) धुलीकोटमाथि नेपाल सरकारको अधिकार भएपछि त्यहाँका राजा भारतको भजनी भन्ने ठाउँमा गएर बस्न थाले। त्यसपछिको वंशावली यसप्रकार छ।

१७. जयगृति शाही (राया ?)
१८. बद्री शाही (राया ?)
१९. भूपनारायण शाही (राया ?)
२०. जयबहादुर शाही (राया ?)
२१. नरनारायण शाही (राया ?)
२२. कर्णवीर राया
२३. जयमलविक्रम सिंह राया (१८९४)
२४. कुलराजसिंह राया
२५. जगतमानसिंह राया
२६. राजा नरेन्द्रविक्रम राया (निसंतान)
(उनीपछि केही वर्ष उनकी रानी पधमकुमारीले राज्य थामिन्)।

माथि उल्लेख गरिएका क्रम १७ देखि २१ सम्मका ५ वटा धुलीकोटे राजाका सन्ततिका नाम प्रा.डा. रामनिवास पाण्डेले उल्लेख गर्नुभएको हो। (१०) त्यसैगरी क्रम २२ देखि २६ सम्मको नामावली सोही वंशका श्री खड्गविक्रम र कृष्णविक्रम शाहहरुबाट प्राप्त भएको हो। वर्तमानकालमा धुलीकोट राज्यका राजाका सन्ततिहरु बाँके, बर्दिया, कैलाली, कञ्चनपुर र सुर्खेततिर बसोबास गर्दैछन्। त्यस वंशका विभिन्न व्यक्तिहरुलाई बेलाबेलामा नेपाल सरकारले प्रदान गरेका र धुलीकोटे राजाहरुले र रानीहरुले प्रदान गरेका कागजप्रमाणका आधारमा उनीहरुको यथार्थ स्थितिबारेमा प्रकाश पारिने छ।

धुलीकोटे राजाहरु गर्मी महिनामा धुलीकोट दरबारमा र जाडोमा कैलाली शतिघाट भन्ने ठाउँमा बस्तथे। वर्तमानकालको शतिघाटनेर भएको शतिको मन्दिर र त्यसैसँग जोडिएको पधमप्रकाशेश्वर महादेवस्थान भन्दा आधा किलोमिटर दक्षिणपट्टि धुलीकोटे राजाको विशाल दरबार थियो। पुरानो दरबारको भग्न ढीस्को अझै बाँकी छ। सो दरबार २००० सालसम्म खडा थियो। रेखदेख नहुँदा २००५ सालमा सो दरबार ढलेको हो। त्यो दरबार कसले बनाए भन्ने कुरा स्पष्टसँग थाहा पाइएको छैन। त्यस्तै धुलीकोट राजकाँडामा पनि दरबारको निर्माण कसका पालामा भयो स्पष्ट भन्न गाह्रो छ।

धुलीकोट राजदरबारमा बाहिरबाट भेट्न जाने र फर्कने मानिसको धुइरो लाग्दथ्यो। तर ती सबैलाई धुलीकोट दरबारको बनोट कस्तो थियो भन्ने थाहा हुदैनथ्यो। कतिपय समयमा दरबार भित्र पसेका राजपरिवारका सदस्यहरु त्यतैबाट लोप भएका प्रशंग वडा रोचक छन्।[११] राजा बसुन्ज्यालसम्म धुलीकोट राज्यको बडो चलहपलह हुन्थ्यो। पछि त्यो ठाउँ निर्जन खण्डहर को रुपमा परिणत भएको भयै छ। त्यस्तो ऐतिहासिक स्थानलाई पर्यटकीय क्षेत्रको रुपमा विकास गर्न सकिन्छ।

वि.सं. १८१४-१६ को नेपाल-अंग्रेज युद्धमा तराईको मध्ये रापतीदेखि महाकालीबीचको समथर खण्ड नेपालले गुमायो। त्यसरी तराईको भाग नेपालबाट गुमेको हुनाले धुलीकोटे राजाहरु

भागेर गएपछिको बसोबास क्षेत्र लखिमपुर पनि भारतीय भूभाग मानियो । त्यसपछि पुगनपुग एक शताबदी उनीहरु त्यहीं बसे । वि.सं. १९११-१२ मा नेपाल भोट युद्धताका धुलीकोटे राजाले नेपाललाई मरमद्दत पुऱ्याएका थिए । त्यसैबेलादेखि धुलीकोटे राजपरिवार नेपालमा बसोबास गर्न थाले । श्री ३ जङ्गबहादुर राणाले धुलीकोटे राजाको नाजुक स्थितिप्रति विचार गर्न थालेको बुझिन्छ । वि.सं. १९१४ मा लखनउको लूटपछि श्री ३ जङ्गबहादुरको स्थिति सुध्रयो । वि.सं. १९१७ मा अंग्रेजहरुले श्री ३ जङ्गलाई वि.सं१८७३ मा गुमेको रापतीपश्चिम महाकालीपूर्वको समतल भूभाग फिर्ता गरे । त्यस भूभागलाई नयाँ नेपाल भन्न थालियो । बाँके, बर्दिया, कैलाली र कञ्चनपुर जस्ता क्षेत्रमा श्री ३ जङ्गले आवाद गराउन विर्ता दिन थाले ।[१२] त्यसपछि श्री ३ जङ्गले नयाँ मुलुकमा वर्षेनीजसो शीकार गर्न जान थाले ।

वि.सं. १९१८ सालमा श्री ३ जङ्गले नयाँ मुलुकको शीकारमा जाँदा सवारी शिवीरमा नित्य हाँजिर हुनेहरुको रोलकक्रममा धुलीकोटे राजाका सन्तानलाई पनि राखे । त्यस मौकामा धुलीकोटे राजा कुसराजसिंह रायालाई जङ्गबहादुरले ज्यादै निगरानी राख्न लगाएका थिए । धुलीकोटे राजाले सो शीकार सवारी शिवीरमा तनमनले श्री ३ जङ्गको सेवा, सत्कार, स्वागत र रखवारी गर्न सके । राजा कुलराजसिंह रायाले नित्य सेवा गरेकोबाट ज्यादै प्रसन्न भएर श्री ३ जङ्गले कञ्चनपुरको मल्लवारातप्पा सुद्दिमले वारामध्ये ११ मौजा तथा कलवारी गौडी सालवसाल भत्ताको खर्च भनी कैलाली जिल्ला भरको अधिकार प्रदान गरेको थिए ।[१३]

वि.सं. १९२० को शीकारमा पनि धुलीकोटे राजाले राम्ररी मरमद्दत पुऱ्याएका हुँदा वि.सं. १९२५ देखि लागू हुनेगरी जिल्लादुल्लूमध्ये डाँडादराको पातालखोला रानीघाटदेखि पश्चिम, कचालीभोरादेखि उत्तर, तालागाउँदेखि पूर्व, कोलीमोरादेखि दक्षिण अन्तरमा पर्ने खेतपाखाको १९२० सालसम्मको उठतीमा ठेक्का गरी ४२८॥३/॥१ राज्य प्रदान गरे । त्यसपछि पनि विर्तावितलप गरी त्यसभित्रको पैदवार, रकमकलम, मारिमेटी अंक, अपुताली, दण्ड, इजारा, हाजिर, चाकचक्कूई समेतको मानाचावलजानी भोगगर्नु भनी रुक्का प्रदान गरेका थिए ।[१४] त्यसरी पुरानो धुलीकोट राज्यफिर्ता पाएपछिका धुलीकोटे राजा र रानीका नाउँबाट प्रशस्त लिखित कागज प्राप्त भएका छन् । यस प्रशंगमा राज्यभरका ठेक इजारा तथा रैतीहरु र चौतरियाहरुको स्थितिबारे पनि विचार गर्नुपर्ने देखिएको छ ।[१५]

धुलीकोटे राजा कुलराजसिंह रायाका भाई चौतरिया पुरन्धरासिंह राया धुलीकोटदेखि पूर्वकर्णालीनदी पारी गाइनेकाँडा भन्ने ठाउँमा बस्तथे । उनलाई डाँडादरा धनरास गाउँको फलामखानी झिक्ने ठेक्का दिइएको थियो । ती चौतरियाले सोही काम अगाडि बढाउन वालासिंह बोगटीलाई वार्षिक रु. ५/- मा ठेक्का दिएका थिए । त्यो ठेक्काको रकम रु. ५/- बाट धुलीकोटमा खनिज श्रोत अन्य ठाउँमा पनि रहेको झलक मिल्दछ । धुलीकोटे राजाले आफ्ना भाइहरुलाई राज्य प्रशासनका हाल हुकुम र ठेक्का, इजारामा पनि सकृय सहभागी गराएको प्रमाणित हुन्छ । वि.सं. १९२१ मा उनै कुलराजासिंह रायाले वालसिंह वोगटीलाई डाँडादराको धनरास गाउँमा पर्ने १३० मुरी खेत मानाचामल स्वरुप प्राप्त भएकोमा वर्षेनी ९२ मुरीधान भर्ने ठेक्का गरी अह्राए पराएको काममा रुजुरहने रुक्का गरिदिएका थिए ।

वि.सं. १९२६ फागुनसुदि १५ रोज ५ मा श्री ३ जंगबहादुर राणाले धुलीकोटे राजा कुलराजसिंह रायाको नाउँमा श्री बंडाली देवतालाई नित्य नैमित्यिक पूजा र पर्वपर्वका पूजा गर्न दिएको गुठीमा त्रिखण्डीकर लगाई गुठीका ठेकदारले टैटंटा गर्दा सो त्रिखण्डीकर बण्डाली देवताका नाउँमा रहेकोले नलिनु भन्ने आदेश गरेका छन् । त्यस दरबन्दीमा रेचगाउँ, प्रचमा गाउँ, साल्मागाउँ र धनास गाउँमा बण्डाली देवताको जमीनमाथि त्रिखण्डीकर नलगाउने भन्ने र गुठीयारलाई सो कर माफ गरिएको पाइन्छ ।

राजा कुलराजसिंह रायाले आफ्नो शासनकालमा धुलीकोटेमा विन्द्रासैनी (विन्धवासिनी?) तथा भैरवलाई इष्टदेवता मान्दथे । उनका छोरा जगतमानसिंह राया बाबुको शेषपछि धुलीकोटे राजा भए । उनका पनि छोरा जेठा नरेन्द्रविक्रम रायाका पालामा धुलीकोट राज्यमा महत्वपूर्ण कार्यहरु भए । उदाहरणको लागि शतिघाटको शिवालय जीर्णोद्धारलाई लिन सकिन्छ । उनकी जेठी महारानीको नाउँ चन्द्राकुमारी सिंघाईका राजाकी छोरी थिइन् । उनी निसन्तान भएकीले दोश्रो विवाहकी रानी भैरवनरसिंह राणाकी छोरी थिइन् । तर उनीतिरबाट पनि सन्तान हुने लक्षण नदेख्दा राजा नरेन्द्रविक्रमसिंह राया आफ्नो ससुराली काठमाडौंबाट सिंघाई जान भनी तराईको बाटो लागे । उनी सिंधाई जानुको लक्ष्य जेठानकी छोरी विवाहका लागि माग्नु थियो । तर दैवको तारतम्यले वि.सं.१९६५ पछि र १९६९ पहिल्यै हैजा लागेर राजा नरेन्द्रविक्रमसिंह रायाको निसन्तान अवस्थामा मृत्यु हुन गयो ।

वि.सं. १९६९ मा राजा नरेन्द्रविक्रमसिंह रायाकी कान्छी रानी पद्मम कुमारीले धनसिंह बोगटी र कुलसिंह बोगटीलाई हलबन्दी र सालवसालको मानाचावल माफीको कागज गरेको पाइन्छ ।

सो कागजमा वि.सं. १८९४ मा श्री ५ महाराजाधिराजबाट धुलीकोटे राजालाई धुलीकोट डाँडादरा मध्ये पर्ने धनरास गाउँ र लिम गाउँको १३० मुरीखेत राजा जयमलविक्रमसिंह रायालाई हलवन्दी मानाचावलस्वरुप प्रदान गरिएको व्यहोरा पनि उल्लेख छ। सो कागजका अनुसार राजा नरेन्द्रविक्रमको मृत्यु भइसकेको र रानी पद्यकुमारीले राज्यको कार्य सञ्चालन गरेको बुझिन्छ। रानी पद्यकुमारीदेवीले धुलीकोट राज्य सञ्चालन गर्न थालेपनि पहिलेबाट गठित धुलीकोट राज्यकचहरी सकृय रहेको पाइन्छ। तसर्थ रानीले सो राज्यकचहरीलाई सान्नीका पश्चिम कर्णाली लगायत पूर्वतर्फका जमीन भित्रका सबै भोतापोता, सुन्धुवाई, हलवन्दी, रैरकम, मानाचवाल, ठेक्कापट्टा, इजारा, दण्डकुण्ड र तजविज गर्ने अधिकार प्रदान गरेकी थिइन्। सो तजविज गर्नेहरुमा १८ मौजाका मुखियाहरुको दरबन्दी यसप्रकार थियो।

| | | | | |
|---|---|---|---|---|
| १. | धनरास | मोजाका | मुखियाहरु | बोगटीबम्म |
| २. | नेटाकाँडा | " | " | " |
| ३. | पुछ्मा | " | " | बूढाक्षेत्री |
| ४. | रेक्चा | " | " | उपाध्याय घोडासैनी जोशी |
| ५. | खोपाडी | " | " | थापाक्षेत्री |
| ६. | कूवा | " | " | उपाध्याय जोशी |
| ७. | साल्म | " | " | बूढाक्षेत्री |
| ८. | खप्द | " | " | थापाक्षेत्री |
| ९. | चिउरी | " | " | बथक (लूलक्षत्री) |
| १०. | धनबोट | " | " | काँश्येवथक(लूल क्षत्री) |
| ११. | बूढाबारे | " | " | बूढाक्षेत्री |
| १२. | सालकोट | " | " | रावलक्षत्री |
| १३. | हाँसेगाउँ | " | " | शाहीठकुरी |
| १४. | नयावन | " | " | " " |
| १५. | पोखरीकाँडा | " | " | |
| १६. | लखरपाटा | " | " | रानामगर |
| १७. | लाटोकाँडा | " | " | जैशी ब्राम्हण (पछि क्षत्री) |
| १८. | जाजुरा | " | " | जैशी ब्राम्हण (पछि क्षत्री) |

धुलीकोट राज्य अन्तर्गत वर्तमान अछाम जिल्लाको दक्षिणीखण्ड बलाँता गाउँ पनि पर्दोरहेछ भन्ने कुरा राजा नरेन्द्रविक्रमसिंह रायाको वि.सं. १९३५ चैत्र बढी १३ रोज ५ मा मुखिया ललित साउदलाई सिमलगैरा गाउँको चारकिल्ला तोकी पाटोविर्ता अघिदेखि भोगीचर्ची आएको पट्टबाँझो आवादगरी थामी खानुभनी गरिदिएको लालमोहर प्राप्त भएको छ।[१६] धुलीकोटे राजाले आफ्ना भाइहरुलाई पनि लखिमपुर, रानीगञ्ज, मोहना, त्रिकूनीया, इमिलियासम्म अंशबण्डा गरिदिएका प्रमाणहरु पाइएका छन्। खासगरी चौतरियाहरुको बस्ती गाइनेकाँडामा थियो र अन्यत्रमा जमीन। उनीहरुपछि चीसापानी कर्णालीको छेउ बस्न थालेको कुरा तत्कालीन उखान र तूक्काले पनि निर्देशन गर्दछ।[१७] श्री ३ जङ्गबहादुसर राणाले धुलीकोट राज्य थामीदिएपछि पनि अर्को उखान बनेको छ।[१८]

धुलीकोट राज्यका चीसापानी चौतरियाहरुलाई डाँडादराको राज्य मल्लवारा भजनीतप्पा भोग गर्ने लालमोहर पनि गरिएको थियो। सो राज्यअर्न्तत बदरिया बगैंचा पनि पर्ने हुँदा त्यही आधारमा जिल्लाकै नाम बर्दिया भएको बुझिन्छ। बदरिया बगैचाभित्र पद्नाहा देवताको अस्थान थियो जहा भव्य मेला लाग्दथ्यो। सुँगरमाला जानेबाटोको पहाडी फेदीमा एउटा प्राचीन कूवा (वापि-नाउलों) छ जहाँबाट जाडो मौसममा धुलीकोटे राजाहरुले पानी पिउँथे। बर्दिया स्थित चीसापानी राष्ट्रिय निकुञ्जभित्र पर्ने गाइने काँडा भन्दा दक्षिणतिर पनि एउटा प्राचीन कुवा (नाउली) छ जुन बाटैमा पर्दछ। पत्थरले निर्मित सो नाउलीको दक्षिणी समथर घाँचमा एउटा पुरानो पोखरी छ जसलाई दानुवाताल भनिन्छ। सो ताल र नाउलीकाबीचमा प्राचीन खण्डहर छ। पहिले त्यहाँका ढुंगाहरुमा बुद्धका मूर्ति कुँदिएका देखिन्थे। कुनै ठाउँमा शिवलिङ्ग थिए त कुनै भत्केका देवलहरु पनि थिए। कुनै भवनभित्र पुराना खियापरेका हातहतियार पाइएका छन्। बूढापाकाको भनाईमा त्यहाँ पहिले दानुवा (दानव-राक्षस) वस्तथ्यो र त्यो पोखरीको पानीमा आफ्ना लट्टा धुन्थ्यो। त्यसैले सो पोखरीलाई दानुवा ताल भनेको हो।[१९] भनिन्छ दानुवाताल वरपर कतै प्रशस्त सुनगाढेको छ भन्ने कुरा पनि धुलीकोटका बूढापाकाहरु भन्दै छन्।

धुलीकोटे राजा नरेन्द्रविक्रमसिंह राया जीवित हुँदासम्म उनका सबैपरिवार कहिले राति त कहिले धुलीकोटमा मौसम अनुसार बस्तथे। वि.सं. १९६५ पछि उनको निसन्तान अवस्थामा मृत्यु भएपछि धुलीकोट राज्यको अधिकार उनकी कान्छीरानी पद्यकुमारीका नाउँबाट चल्न थाल्यो। जेठी रानी चन्द्रकुमारी देवी राजाका साथ शति हुँदा उनैका संस्मरणमा शत्ति मन्दिर निर्मित भयो भने कर्णालीको सो घाटलाई सत्तिघाट भन्न थालियो। रानी पद्यकुमारीले श्री नरेन्द्र पद्य प्रकाशेश्वर मन्दिरमा ५० धार्नीको घण्ट अर्पण गरिन्।[२०] त्यसै नापको घण्ट धुलीकोटे चौतरियाहरुले गाइने काँडा भैरवथान कुलदेउतालाई चढाए। भनिन्छ, शत्तिघाटको घण्ट र गाइनेकाँडा घण्टको आवाज आपसमा सुनिन्थ्यो। तर गाइने काँडाको घण्टा वेकम्मा भई फूटेकोले बजाउँन नमिल्ने अवस्था छ।

कैलाली जिल्ला सत्ति गा.वि.स. वार्ड नं. ८ स्थित श्री नरेन्द्रपद्य प्रकाशेश्वर शिवमन्दिरमा प्रयोग गरिएका ईंटमा "१७०५ सम्वत्" भन्ने अक्षर पाइएका छन् । त्यसबाट सो मन्दिरको निर्माण त्यसै समयमा भएको प्रमाणित हुन्छ । पछि रानी पद्यकुमारीले सानो मन्दिरलाई पुनर्निमाण गरी ठूलो पारेर नयाँ नामकरण गरेको बुझिन्छ । त्यहाँ प्रयोग भएका ईटाको नाप ९×४×३" छ भने मन्दिरको १५×१५" लम्बाई चौडाई र ३०' उचाई छ । मन्दिर प्राङ्गण ६३×४३' छ भने उचाई ९' छ । मन्दिरमा सुर्कीचूनाको बज्र लगाइएको आकर्षक शैलिमा छ ।[२१]

वि.सं. १९६५ माघ शुल्क द्वादशीका दिन सानो शिवालय भएको ठाउँमा विशाल मन्दिर निर्माण गरिएको थियो । नवनिर्मित मन्दिरको नाम "नरेन्द्रपद्यप्रकाशेश्वर" भएबाट ३जनाको योगदान स्पपष्ट हुन्छ । वि.सं. १९६७ मा मन्दिरमहोत्सवमा आफ्ना पतिका नाममा महारानीले एक अभिलेख सहित घण्ट चढाइन् । सो मन्दिरका पूजा आजाको निम्ति मासिक रु. ६/- र टहलूवाको मासिक रु. २/- ठेकी मन्दिर वरिपरि ७०० विगाहको जंगल गुठी राखीदिइन् । वि.सं. १९९५ मा चैतेदशैं र वडादशैंको पूजाखर्च रु.१५/-, १५/- टहलूवाको, १५/- पुजारीको, २५/पूजाखर्च, ८/- नित्यभेटी महीनावारी रु. २.५०/- मन्दिर स्थापनाका दिनमा ब्राम्हण भोजन २.५० कम्पनी तोकिएको थियो । त्यस मन्दिर वरिपरि धर्मशाला पनि हुनाले सत्ति देवीलाई वलिको पनि व्यवस्था भएको सो मन्दिर सहित पूजाखर्च रु. ३०/- र कूल खर्च ९२१/- नबढाउनु भनिएको पाइन्छ । यसरी सो मन्दिरमा एक पूजारी नित्य रहने गरी कास्की पोखराको पौडेल ब्राम्हणलाई राखियो ।[२२]

वि.सं. १९७५ मा महारानी पद्यकुमारीदेवीले श्री ३ महाराजालाई आफ्ना सन्तान पनि नभएका, राजा पनि परलोक भएका, राजाका चोखा भाइहरु पनि नहुँदा हकदारविहीन धुलीकोट राज्यलाई खारेज गरी आफूलाई जीविकाको रुपमा वार्षिक हकदारविहीन धुलीकोट राज्यलाई खारेज गरी आफूलाई जीविकाको रुपमा वार्षिक रु. ६०००/- खान्गी गाउँ र धुलीकोट राज्य नेपालमा विलयगरी पाउँभनी विन्तिपत्र चढाइन् । उनको विन्तिपत्रमाथि श्री ३ भीमशमशेरका शासन कालमा वल्लतल्ल सुनुवाई भयो । श्री ३ भीमशम्शेरले धुलीकोट राज्यको दक्षिण तलहट्टी जमीनलाई आफ्नी पत्नी र छोरानातिहरुलाई विर्ता लेखाइदिए:-

(१) श्री सीतामहारानी
(२) श्री हीरण्यशमशेर जङ्गबहादुर राणा
(३) श्री शशिशम्शेर जङ्गबहादुर राणा
(४) श्री महावीरशम्शेर " "

उपर्युक्त ४ जनालाई कर्णालीपूर्व, पहाडदेखिदक्षिण, मोहना नदीदेखि उत्तर कैलाली मल्लवारा भन्ने जमीन्दारी तोकिएको थियो ।

धुलीकोट राज्यका चौतरियाहरुलाई त्यतिबेलासम्म सो कुरा थाहा रहेनछ । जब थाहा भयो उनीहरु ज्यादै विस्मित भए । त्यसकारण सो विरुद्ध चौतरिया रणविक्रमसिंह रायाले रैतिहरु राणा शासनको विरुद्ध उचाल्न थाले । उनीहरुलाई त्यो कुरा अझै थाहा हुदैनथ्यो होला तर धुलीकोट क्षेत्रको प्रशासन महारानीको राज्यकचहरीको सट्टा दैलेख तहवीलले गर्न थालेको थियो । महारानीलाई वार्षिक रु. ६०००/- त मिल्यो तर चौतरियालाई केही नमिलेकोले प्रतिक्रिया हुन गएको थियो । चौतरिया रणविक्रमसिंह रायाले केही लडाकू र हतियार लिई दैलेख तहवील लूट्ने योजना बनाए । त्यो कुरा कुनै सूत्रद्वारा दैलेखका बडाहाकिमले थाहा पाएका हुनाले केही शिपाही खटाइ चौतरिया रणविक्रमलाई पक्राउपूर्जीसहित पठाई पक्रेर ल्याउने आदेश दिएका थिए । पक्राउपूर्जी आएको थाहा पाएका चौतरिया लुक्न सफल भए । अर्का थरिको भनाईमा उनलाई पक्री पट्के कागज गराए भन्ने पनि थाहा पाइन्छ ।[२३]

वि.सं. १९९१ सालमा चलेको सो विद्रोहको झलक दैलेख दुल्लू निवासी चक्रबहादुर शाहीका बाबूले चौतरिया रणविक्रम शाहको सहयोगार्थ केहीहतियार जम्मा गरेका थिए । तर शिपाहीहरुले ती हतियारहरु जम्मापारी निजलाई पक्री कायलनामा गराएका थिए ।[२४]

धुलीकोटे चौतरियाहरुले जनता उठाई दैलेख तहवील लूटी राणा शासकको विरोध गर्ने योजना सफल नभएपछि उदयराज शाह, वीरविक्रम शाह र हरेन्द्रविक्रम शाहलाई निरंशी तुल्याएकोमा भौंरा तप्पाका ११ गा.वि.स.जीमिदारी र लखिमपुर, अमीलिया र रानीगञ्जको केही जमीन रानी पद्यकुमारीदेवीले आफ्ना इष्टदेवीका पूजारीलाई मटिदानविर्ता दिएकी हुँदा चौतरियाहरु अवाक परेका थिए । चौतरियका सन्तान रणविक्रम शाहले "नेपालमा न्याय मिल्दैन" भनी इलाहावाद उच्च न्यायालयमा मुद्दा दायरा गरे । सो न्यायालयले हिन्दूविधि अनुसार विधवारानीले आफ्ना खुसीले विर्ताएको जमीन भाइअंशबाट टुटाई अन्यत्र गर्न नपाइने फैसला गरिदियो । तर ई. १९५७-५८ मा सो मुद्दाको फैसला हुँदासम्म अमीलिया, रानीगञ्ज, लखिमपुर र त्रिकोलियाको जमीन भारतीय उत्तरप्रदेशमा जमीन्दारी प्रथा

उन्मूलन गर्ने कानून पारित गरेकोले धुलीकोटे चौतरियाहरु नेपाली भएबाटकुनै हक दावी गर्न नपाउने भए।[२५]

नेपालको सरहद्भित्र धुलीकोट राज्यका चौतरियाहरुको अंशहरण गरेवाट रिसाई त्यो खानदान नै विद्रोहीवनी राणा विरोधी दल नेपाली कांग्रेसमा लागेको हुँदा २००७ सालसम्म उनीहरुप्रति कुनै हेर चाह भएन। २००७ सालको क्रान्तिपछि नेपालमा बल्ल प्रजातन्त्र आएकोले धुलीकोटे चौतरियाहरुले आफ्नो विर्ताजमीनको दावी गरी सर्वोच्च अदालतमा पुराना प्रमाणसहमति मुद्दा हाले। त्यसै शिलशिलामा श्री खड्गविक्रमशाहले २००८ सालमा प्रधानमन्त्री मातृकाप्रसाद कोइरालालाई भेटी आफ्नो दलिल पेश गर्दा "नेपाली कांग्रसले जमीन्दारी प्रथाका साथै विर्तापनि उन्मूलन गर्ने भएकोले त्यो मुद्दाको कुनै औचित्य नरहने" भन्ने सल्लाह दिएकाले मुद्दाको तारिख छोडिदिए। त्यसपछि सो मुद्दा र चौतरियाको सहुलियत सधैंको निम्ति टुङ्गियो। आजकल धुलीकोटे चौतरियाहरु चीसापानी चौतरियाका नामले प्रख्यात भई ठाउँ ठाउँमा बसोबासगरी आएका छन्। उनीहरुको अद्यावधिक वंशावली, तत्कालीन कागजपत्रहरुको संग्रह पुस्तकाकारमा प्रकाशन गर्ने लक्ष्य राखिएकोले यस लेखमा यत्ति नै उल्लेख गरिएको छ।

## टिप्पणीखण्ड

१) वि.सं. २०५३ को गर्मि विदामा धुलीकोट राज्यको प्रारम्भिक सर्वेक्षण कार्य भएको थियो। त्यस कार्यका लागि कहिं कतैबाट सहयोग पाइन्छ कि भन्ने आशा त थियो तर निराश हात लाग्यो। यस कार्यमा व्यक्तिगत रुपमा कैलाली टीकापुर स्थित श्री वीरेन्द्र विद्यामन्दिर उच्च मा.वि.का विज्ञान शिक्षक श्री ताराप्रसाद घोडासैनी(जोशी)ज्यूको आवश्यक सहयोग रहेको थियो।

२) २०५४ सालको गर्मीविदामा लेखकले गाइने काँडाको स्थलगत निरीक्षण गरेको हो। यस भ्रमणमा साथदिने काम शिक्षक श्री ऋषिराम फिर्केज्यूले गरेका हुँदा निजलाई धन्यवाद दिनु वेश ठान्दछु।

गाइनेकाँडा भैरवस्थानमा वि.सं. १८९३, १९६५, १९७९ का ५० धार्नी (१२५ किलोग्राम) सम्मका घण्टहरु अर्पित छन्। १.५ रोपनी वरिपरिको क्षेत्रलाई पर्खालले घेरिएको छ। कालभैरवलाई पाठा र कुखुरा वलि दिइन्छ भने सुरबगी स्थानमा दशैं पूर्णिमा र जेष्ठ पूर्णिमामा पूजा गरिन्छ। त्यहीं माटे देवताको पनि न्वागीपूजा हुन्छ। न्वागी चढाएपछि मात्र ध्वजा, खूटो, पर्गालो, पाठो लिएर पूर्णिमा, चतुर्दशी र पञ्चमीमा पूजा हुन्छ। त्यस पूजामा पूरी पूजारा र स्थानीय बासिन्दाले पूजा सामान पठाउँछन्।

३) तप्पा भन्नाले मालपोत जम्मा गर्न सुविधा होस् भनी गाउँभन्दा ठूला जिल्ला भन्दा साना क्षेत्रलाई प्रशासनिक एकाईका रुपमा बुझिन्थ्यो। यो कुरा र ८ तप्पाको विवरणको जानकारी दिनेमा श्री कृष्णविक्रम शाह चीसापानी चौतरिया र श्री खड्गविक्रम शाह भू.पू. सांसद, बग्नाहा, बर्दिया।

४) श्री गोविन्दराज जोशी, कैलाली जिल्ला साँढेपानी गा.वि.स. वार्ड नं. ७, लठवा गाउँ निवासीबाट प्राप्त विवरणका आधारमा।

५) कैलाली जिल्ला सुँगुरखाल गा.वि.स. जूतेशूली निवासी ७५ वर्षिय श्री रतिराम मुढभरीको परम्परा र अनुभव अनुसार प्राप्त जानकारीका आधारमा।

६) राजाराम सुवेदी, "बाइसी राज्यको सारतत्व" <u>गरिमा</u>, १२६, पृष्ठ २३।

७) योगी नरहरिनाथ, <u>इतिहास प्रकाश</u>, १ (काठमाडौं, इ.प्र.संघ, २०१०) पृ. ६९।

८) योगी नरहरिनाथ, <u>इतिहास प्रकाश</u>, १ (काठमाडौं, इ.प्र.संघ २०१०) पृ. ६८।

९) धुलीकोटे राजगुरु सन्तति सांसद श्री शिवराज जोशीगुटुबाट प्राप्त जानकारी।

१०) Ram Niwas Pande, <u>Making of Modern Nepal</u> (Jaipur, Nirala Publications, 1997) P. 261.

राजाराम सुवेदी, <u>कर्णाली प्रदेशको मध्यकालीन इतिहास</u> (काठमाडौं : साझा प्रकाशन, २०५४) पृष्ठ ४४९। राजाराम सुवेदी, <u>वाइसी राज्यको ऐतिहासिक रुपरेखा</u> (काठमाडौं : ने.ए.अनुसन्धान केन्दै, २०५५) पृष्ठ, ७७।

११) एकपटकको कुरा हो केही मानिसहरु राजालाई भेट गर्न धुलीकोट गएका थिए। दरबारमा उनीहरु पुगेर बोलाउँदा एकजना ६०-७० वर्षको सर्लक्कै सेतो कपडा र सेतै फुलेकी दरबारिया महिला देखा परिन्। तर ती विधवा दरबारभित्र पसेकी बाहिर निस्किनन्। पछि खोजी गर्दा उनी पुनः देखा परिनन्। यसबाट दरबारभित्रको बनोट जटील रहेको संकेत मिल्छ।

१२) राजाराम सुवेदी, "कैलाली र कञ्चनपुरको एक ऐतिहासिक सर्वेक्षण" <u>सि.एन.ए.एस्.जर्नल</u>, भोलुम २२, नं. १ (जनवरी १९९५) पृष्ठ ८९-९८।

१३) कैलाली जिल्ला, दोदोधारा गा.वि.स. वार्ड नं. २ कुम्भियानिवासी श्री सुवेदार गगनसिंह बम्मसँग रहेका कागजहरुका सक्कलबमोजिम ।

१४) ऐजनकै संग्रहबाट ।

१५) कैलाली जिल्ला कुम्मिया २ निवासी कन्यादेवताका (गुराउ) पूजारी श्री राम लालदास थारुबाट र ऐ. निवासी श्री भीमबहादुर बम्बबाट प्राप्त वंशावलीः राजा कर्णवीर सिंह राया (कन्या राजा), राजा जयमलविक्रमसिंह राया (वि.सं. १८९४, मानाचावल), राजा कुलराजसिंह राया (श्री ३ जङ्गबाट पुनः राज्य प्राप्ति) भाई पुरन्धरासिंह राया (वि.सं. १९२३) ।




१६) अछाम जिल्ला बलाँता गा.वि.स.वार्ड नं. ३ का मुखिया श्री जगराम साउदको संग्रहमा रहेको सक्कल लालमोहरका आधारमा ।

१७) "चिल्खायाकी आइमाइका खुट्टा वाङगा
रोलका कुखुराका खुट्टाबाङ्गा, पुच्छरबाङ्गा
चीसापानीका रुखवाङ्गा, चौतरिया बाङ्गा ।"

१८) "चिउरी खायो देउचनले धन्बोट काँइयाले
हात्तिचेवा बालासिंले खेद्दो भवानसिंहले ।"

१९) बर्दिया बग्नाहा निवासी सांसद श्री खड्गविक्रम शाहबाट प्राप्त सूचनाका आधारमा ।

२०) सो घण्टा २०२७ सालमा राति चारी भएको कुरा त्यहींका पूजारीले बताउँछन् ।

२१) मन्दिर भित्र ठूलो शिवलिङ्ग छ र त्यसको छेउ भित्तामा यस्तो श्रलोक छ ।
"शिवाकान्त शम्भो ससाकार्द्ध मौले
महेशान्सूलि जटाजूटधारिम् ॥
त्वेमेको जगद व्यापको विश्वरुपा
प्रशिद्ध प्रशिद्ध प्रभो पूर्षारुपा ॥"

२२) हाल श्री नरेन्द्रपद्मप्रकाशेश्वर महादेव मन्दिरमा डोटी वोगटानका जोशीले २००६ सालदेखि पूजागरी आएका छन् । निजको भनाई अनुसार पूर्ववर्ति पौडेल ब्राम्हण निसन्तान भएकाले उनैले पूजा चलाएको बताए । उनले सो पूजा चलाएको वृत्ति विषयमा मालपोत कार्यालयमा कचिङ्ग परेको छ ।

२३) श्री गोविन्दप्रसाद जोशीज्यूको भनाइका आधारमा ।

२४) त्यो विद्रोहबाट के स्पष्ट हुन्छ भने धुलीकोटे राजा निसन्तान भएर मरेपनि उनका भाइलाई त्यो रजौटा पद दिन सकिन्थ्यो तर महारानी पद्मकुमारी राणाकी छोरीभनी चौतरियाहरुले निन्दा गर्दा त्यस्तो भएको कुरा पनि स्थलगत सर्वेक्षणबाट ज्ञात भएको छ ।

२५) श्री कृष्णविक्रम शाहसितको साक्षात्कारबाट प्राप्त जानकारी ।

# पचलीस्थित बम्बीर बिकटेश्वर महादेव मन्दिर जीर्णोद्धार

**- प्रकाश दर्नाल**

**स्थान :-**

काठमाडौं जिल्लाको काठमाडौं महानगरपालिका वडा नं. १२ मा बम्बीर बिकटेश्वर महादेव मन्दिर पर्दछ। यो मन्दिरमा तिनवटा शिखर भएकोले यसलाई तिनदेवल पनि भन्छन्। पचली भैरबको दक्षिणतर्फ रहेको बागमतीघाट जाँदा बाँयातर्फ चुना सुर्खीको ठूलो प्रवेशद्वार देखिन्छ। यसै प्रवेशद्वारबाट ढुङ्गा छापेको बाटो सिधा गएमा बम्बीर बिकटेश्वर महादेव मन्दिरको पश्चिम सत्तलको ढोका आउँछ। यहाँबाट भित्र गएपछि महादेव मन्दिरको प्राङ्गणमा पुगिन्छ। दक्षिणतर्फको सत्तलको ढोकाबाट पनि बागमतीस्थित पचलीघाट जाने ढुङ्गा छापेको सिधा बाटो छ।

**मन्दिरको परिचय :-**

चारैतर्फ दुई नाले तथा दुई पाखा झिंगटी छाना भएको चौघेरा सत्तलको बीचमा तीनवटा (तलबाट माथि सानो हुँदै गएको) पेटीमाथि अवस्थित चौबिसवटा थामहरूले बनेको एउटै लाम्चो गर्भगृहमा तिनवटा शिवलिङ्ग भएको र हरेक शिवलिङ्गको माथि टेराकोटाको शिखर छ। थामहरू र गर्भगृहको बाहिरी गारोको बीचको भाग खुला प्रदक्षिणा पथको रूपमा छ। गर्भगृह जाने आठवटा ढोका मध्ये पूर्व पश्चिममा एक-एकवटा र उत्तर दक्षिणमा तिन-तिनवटा छ। ढोकाको बनोट मल्लकालीन कलाबाट प्रभावित भएको स्पष्ट देखिन्छ। शिखर उठाइएको स्थानमा झिंगटीको छाना भएकोमा जस्ताको छाना राखी मर्मत गरेको पाइयो। माझको शिखर दुई छेउको शिखरभन्दा अग्लो छ। यसको चारैतर्फ स-साना देवलहरू भएकोले अन्य दुई भन्दा बढी कलात्मक देखिन्छ। तिनैवटा शिखरको वरिपरि अष्ट दिकपालका मूर्तिहरू पाइन्छन्। शिखरको तलतिर फुकेको र माथि साँधुरिँदै गई सवैभन्दा माथि घण्टाकारमा सुन मोरेको कलश गजूर भएकोले मन्दिरको सुन्दरता र भव्यता झन् बढेको छ। थाममाथिको कार्नेशको चारैतिर स-साना झ्याल, कुँशल र टुँडालहरू राखी छाना राखिएको छ।

नेपालमा विविध शैली र बास्तुकलाले युक्त धेरै मन्दिरहरू पाइन्छन्। ती मध्ये बम्बीर बिकटेश्वर महादेव मन्दिरको आफ्नै मौलिक बास्तुकला र शैलीले गर्दा अद्वितीय स्थान ओगटेको छ भन्दा अत्युक्ति नहोला।

**ऐतिहासिक पृष्ठभूमि :-**

यस्तो बेजोड बास्तुकलाको निर्माणकर्ता बमबहादुर कुँवर राणाको विषयमा केही चर्चा गर्नु उपयुक्त नै हुने ठान्दछु। यिनी काजी बालनरसिं कुँवर र कान्छी कजिनी गणेशकुमारीका माहिला छोरा थिए। यिनको जन्म वि.सं. १८७५ मा भएको थियो। यिनले तीन विवाह गरेका थिए। जेठी पाल्याकी मुख्यानीबाट ले.क.टेग बहादुर कुँवर राणा, माहिली मुख्यानीबाट जर्नेल बम्बीर बिक्रम कुँवर राणा र कान्छी इन्द्रवदनबाट कर्णेल यक्ष विक्रम कुँवर राणा छोराहरू थिए। यिनको निवास गणवहाल (लगनटोल) मा थियो। यिनले सेनाको सुवेदार पदबाट जागिर शुरू गरेका थिए। उनी १९०२ सालमा कलकत्ताको लागि नेपाली वकिलमा नियुक्त भएर गएका थिए (कार्की, २, २०३६)। वि.सं. १९०३, असोजको कोतपर्वको समयमा यिनी काजी पदमा थिए। त्यसको लगत्तै १९०४ सालमा यिनी कम्याण्डर इन चिफ जनरल हुन पुगे। यसै

समयदेखि नेपालमा प्रथम पटक सैनिकहरूको तथ्याङ्क राख्न सैनिक कमाण्डरी किताव खानाको स्थापना भएको मानिन्छ । वि.सं. १९०६ देखि १९०७ सात सालसम्म जङ्गबहादुर कुँवरराणा बेलायतको भ्रमणमा जाँदा बमबहादुर कुँवरराणा नेपालका प्रधानमन्त्री भएका थिए । वि.सं. १९०७ मा बमवहादुर कुँवर राणाले बागमतीको दाहिने किनारामा बम्बीर बिकटेश्वर महादेव मन्दिर (चौघेरा सत्तल सहित), कृष्ण सुभद्रा बलरामको जगन्नाथ मन्दिर र हनुमान मन्दिर बनाए । यिनले गुहयेश्वरी मन्दिर अगाडि प्रस्तरको स्तम्भमाथि सुनको जोर सिंहले तरवार बोकेको मूर्ति तथा भद्रकाली (लुमडी) मा सुनको जलप लगाएको झल्लर र तोरण चढाएका थिए । लुमडीमा वर्षको एक पटक घोडे जात्राको दिन बोकाको बली दिने गुठी राखे । गुह्येश्वरी माईमा हरेक महिनाको शुक्ल अष्टमीमा बोका बली पुजा गर्ने गुठीको व्यवस्था गरे । यिनले पशुपति मृगस्थलीमा बमरामेश्वर मन्दिर र सत्तल स्थापना गरी दिएका थिए । त्यस्तै पशुपतिनाथ मन्दिरमा ११० तोला सुनको नागको मुकुट चढाउनुको साथै ७००० तोला चाँदीको गरगहना प्रीति गरी चढाएको र उनको कजिनी गृवानन्दकुमारीले १० तोला सुनको नाग मुकुट चढाएको सो सामानहरू यथास्थितिमा छ छैन रेखदेख गर्न अक्षय तृतियाका दिन उक्त गुठीको अधिकार प्राप्त व्यक्तिले गुठीकै तर्फवाट कालीगढ लगी ज्याला दिइ सरसफाई तथा मर्मत गर्न गराउन व्यवस्था पनि गरिएको जानकारी व्यवस्थापन समितिबाट प्राप्त भएको छ । बम्बीर विकटेश्वर महादेवको दैनिक नित्य र आरती पूजा गर्न, बर्षबन्धन पूजा गर्न, सदावर्त वितरण गर्न, मन्दिर, सत्तल र बगैचाको मर्मत स्याहार गर्न, कृष्णाष्टमी र शिवरात्री पर्व मनाउन यिनले उपत्यकामा जम्मा ६९५ रोपनी जग्गा गुठी राखी दिएका थिए । बम्बीर विकटेश्वर महादेव मन्दिर भित्रको यिनको १९१३ (१९६×६५ से.मी.) सालको ताम्रपत्र र उनको छोरा यक्ष विक्रमको १९३४ (१२०×३६ से.मि.) सालको ताम्रपत्र परिशिष्टाङ्कमा दिइएको छ ।

वि.सं. १९०७ मा जंग वहादुर कुँवर राणा बेलायतबाट फर्केको केही महिनामै बद्रीनरसिं, जयवहादुर, करबीर खत्री तथा उपेन्द्र विक्रम शाहबाट रचिएको षड्यन्त्र बमबहादुर कुँवर राणाबाट खोलिएकोले जंगवहादुर राणाले विफल तुल्याएका थिए । (कार्की, १५.२०३६)

वि.सं. १९११ मा बमवहादुर राणाको नेतृत्वमा गएको नेपाली सेनाले केरूङ कब्जा गर्न सफल भयो । यसै युद्धमा जंगवहादुर राणा तिव्वत जाँदा बमबहादुर राणा का.मु. प्रधानमन्त्री बने । १९१३ सालमा जंगवहादुर राणाले अकस्मात प्रधानमन्त्रीबाट राजीनामा दिई राजा सुरेन्द्र विक्रम शाहबाट लालमोहर गराई बमबहादुर राणालाई प्रधानमन्त्री बनाए । त्यही वर्ष जंङ्गबहादुर राणालाई कास्की र लम्जुङको श्री ३ महाराजको पद दिइएको थियो । बमबहादुर कुँवर राणाको मृत्यु वि.सं. १९१४ जेठ महिनामा भएको थियो ।

**मन्दिरको संरचना :-**

यो मन्दिर तिनवटा पेटीमाथि अवस्थित तथा १३.६५ मि. लम्वाई, ५.६० मि. चौडाई र १६.५० मि. अग्लो छ । दक्षिणाभिमुख यो मन्दिरको मुख्य ढुङ्गाको सिंढी दक्षिणतिर नै रहेको छ । तिनवटै पेटीमा कँशिमो, दचिअप्पा तथा विभिन्न बुट्टे इँटा तथा ढुङ्गा राखिएको हुँदा निकै आकर्षक देखिन्छ । दक्षिणतिर सिढीको दायाँ बायाँ दुइवटा घण्टा छ । ............

पूर्वतर्फको घण्टामा "स्वस्ति श्री सम्वत १९०७ साल मिति आषाढ सुदि १५ रोज ४ मा श्री श्री श्री बम्बीर बिकटेश्वर प्रीति गरि श्री मद्राजकुमारकुमारात्मज श्री कम्याण्डर इन चिफ जनरल बमवहादुर कुँवर राणाजीबाट चढाएको घंटः ॥ यस घंटमा जसले लोभानि पापानी गर्ला तसलाई पंचमहापातक शिवको कुदृष्टि लाग्ला शुभम ॥" (रेग्मी, २१४, २०३३) लेखिएको अभिलेख भएकोमा अहिले तेल र धुलोले गर्दा अक्षरहरू स्पष्ट देख्न गाह्रो पर्दछ ।

मन्दिरको गर्भगृह तेश्रो पेटीमाथि रहेको छ । पूर्व पश्चिम लामो एउटै गर्भगृहमा तिनवटा लहरै शिवलिङ्गहरू छन् । प्रत्येक शिवलिङ्गको माथि शिखर रहेको छ । एउटै गर्भगृहमा लहरै बनाइएका तिनवटा टेराकोटाको शिखरले गर्दा नै बम्बीर बिकटेश्वर महादेव मन्दिर नेपाली वास्तुकलाको इतिहासमा छुट्टै मौलिकस्थान राख्न सफल भएको छ । मन्दिरको गर्भगृहभित्र जान उत्तर र दक्षिणतर्फ तिन तिनवटा र पूर्व र पश्चिमतर्फ एक एकवटा गरेर जम्मा आठवटा काठका कलात्मक ढोकाहरू छन् । हरेक ढोकाको दायाँ बायाँ टेराकोटाको नागनागिनी र नागवेली बुट्टा छ । मन्दिरको दक्षिणतर्फ गारोमा दुईवटा प्रस्तरका कीर्तिमुख भैरबहरू (२८×२० से.मि.) छन् । मन्दिरको वाहिरी गारो, भित्री गारो र शिखरको गारोहरूमा वाहिरपट्टि दचिअप्पा देखिए पनि भित्रपट्टि इँटा, माटो र काठ प्रयोग गरिएको छ । गर्भगृहको वाहिरी गारो र तेश्रो पेटीको वरिपरि चौबिसवटा काठको थाम माथि जस्ता छाना राखिएको थियो । थाम र गारो बीचको ठाँउ चाँही मन्दिरलाई प्रदक्षिणा गर्ने पथ भएको छ । हरेक काठको थाम मुनि प्रस्तर सिंह र माथि काठको कलात्मक मेथ छ । चार कुनाको मेथ र निदाल तथा उत्तर दक्षिणतर्फको बाहिर देखिएको दुई निदालमा कुँसँरू (सिंख्वा) कुँदिएको छ । निदाल माथि कार्नेश छ । यसमाथि काठका साना साना झ्याल, कुँशल र टुँडालहरू राखी जस्ता छाना राखिएको छ । यसै छाना माथि गर्भगृहको तिनवटा शिवलिङ्गको तिनवटा अलग अलग शिखर छ । माझको शिखर वरिपरि चार सानो देवल भएकोले र यो दुई छेउको शिखर

भन्दा अलि अग्लो र ठूलो भएकोले पनि ज्यादा आकर्षक देखिन्छ । लामो एउटै गर्भगृहमाथि निर्माण गरिएका तिनवटा टेराकोटाका शिखरहरू ज्यादै भव्य र बेजोड छन् । पूर्वतर्फको शिखरको पूर्वमा इन्द्र, उत्तरमा इशान (शिव) र दक्षिणमा अग्नी मूर्तिहरू छन् । माझको दक्षिणपट्टि देवलमा यमराज र उत्तरपट्टि देवलमा कुवेर मूर्तिहरू पाइन्छन् । त्यस्तै पश्चिमतर्फको शिखरको पश्चिममा बरूण, उत्तरमा वायु र दक्षिणमा नैऋति मूर्तिहरू रहेका छन् । यसरी अष्ट दिक्पालका मूर्तिहरू क्रमश पूर्व, आग्नेयकोण, दक्षिण, नैऋत्यकोण, पश्चिम, बायव्यकोण, उत्तर र इशानकोण दिशामा गरेर क्रमश इन्द्र, अग्नी, यमराज, नैऋति, बरूण, बायु, कुवेर र इशान मूर्तिहरू तिनबटै शिखरहरूमा रहेका देखिन्छन् ।

पूर्व र पश्चिमतर्फको शिखरको मूर्तिमाथि टेराकोटाकै कार्नेश बुट्टा छ । त्यसमाथि शिखर केही फुकेको भए पनि गजूरपट्टि साधुँरिदै गई घण्टाकार बुट्टामा सुनको कलश र त्रिशुल गजूर राखिएको छ । तर माझको शिखर अलि बेग्लै र ठूलो भए पनि माथिको बुट्टा र गजूर अन्य दुईको जस्तै छ ।

मन्दिरभित्र उत्तरतर्फको गारोमा पश्चिमवाट पूर्व क्रमशः नारायण, गणेश, नारायण र सूर्य मूर्ति छ । त्यस्तै दक्षिणतर्फको गारोमा पूर्वदेखि पश्चिम क्रमशः गणेश, नारायण शक्ति सहितको बिष्णु र सूर्य मूर्ति छ । उत्तरतर्फको गारोमा चाँही वि.सं. १९१३ को ताम्रपत्र राखिएको छ ।

**प्राङ्गणमा भएका देवल तथा मन्दिरहरु :-**

बम्वीर विकटेश्वर मन्दिरको प्राङ्गणमा तेलिया इँटा छापिएको छ । मन्दिरको दक्षिणतर्फ प्राङ्गणमा तिनवटा ठूलठूला चौडा प्रस्तर विच्छाइएको छ । यहाँ बर्षबन्धन पूजा भोग तथा होम यज्ञादि गरिन्छ । मन्दिरको पूर्व दक्षिण प्राङ्गणस्थित टेराकोटाको सानो देवलभित्र पश्चिमाभिमुख प्रस्तरको सूर्य (६०×३३ से.मि.) मूर्ति छ । यस्तै देवल पश्चिम दक्षिण, पश्चिम उत्तर र पूर्व उत्तरतर्फ रहेको छ । त्यहाँ क्रमश प्रस्तरका गणेश (५३×३६ से.मि.), महिषमर्दिनी (५१×३२ से.मि.) र विष्णुको (६०×३३ से.मि.) मूर्तिहरू पाइन्छन् । गणेश मूर्ति पूर्वतर्फ, महिषमर्दिनी भगवती दक्षिणतर्फ र विष्णु मूर्ति पश्चिमतर्फ फर्काएर राखिएका छन् । यस दृष्टिले यो मन्दिरलाइ शिव पान्चायन पनि भन्न सकिन्छ । मन्दिरको पश्चिममा अग्लो ढुङ्गाको पिठिकामाथि प्रस्तरकै सुन्दर वसाहा (११७×९० से.मि.) छ ।

मन्दिरको उत्तरतिर पश्चिम भगवती देवलदेखि पूर्व विष्णु देवलसम्म क्रमश यी स्मारकहरू पाइन्छन् :-

**(क) यक्षनन्देश्वर, तार्क्षभक्तिश्वर शिव मन्दिर ।**

यँहा वि.सं. १९७९ को शिलालेखन (४९X७० से.मि.) भेटिन्छ । बसाहा (५७×४२ से.मि.) को अगाडी ढुङ्गाबाट निर्मित दक्षिणाभिमुख एक तले शिव मन्दिर रहेको छ ।

(ख) त्रिशुल ।

ढुङ्गाको अग्लो पिठिकामा धातुवाट निर्मित त्रिशुल राखिएको छ ।

**(ग) तुलाभक्तेश्वर डम्वर भक्तेश्वर मन्दिर ।**

त्रिशुलसँगै ढुङ्गाको अग्लो पिठिकामा पूर्व फर्काएर प्रस्तरको वसाहा (७७×४३ से.मि.) राखिएको छ । यसको पश्चिमतर्फ २००७ सालको शिलालेख (७९×४१ से.मि.) छ । बसाहाको सामुन्ने चाँही लहरै स-साना तिनवटा ढुङ्गाको दक्षिण फर्कायर राखिएका शिव मन्दिर (२०१×८८ से.मि.) हरू छन् ।

**(घ) दुई ढुङ्गामा शिव मन्दिर ।**

तिनवटा ढुङ्गाको मन्दिरको पूर्वतर्फ त्यस्तै अग्लो ढुङ्गाको पिठिका माथि निर्मित दुई साना ढुङ्गाका शिव मन्दिर (८५×८६ से.मि.) छ । यसको पश्चिममा पनि सानो प्रस्तरको वसाहा (२५×२२ से.मि.) पाइन्छ । मन्दिर दक्षिणतर्फ फर्केको छ ।

**(ङ) भुवन भक्तेश्वर ।**

दुई शिव मन्दिरको पूर्वतिर अर्को दक्षिणभिमुख भुवनभक्तेश्वर शिव मन्दिर पर्दछ । यो मन्दिरको पश्चिममा वि.सं. १९९९ को शिलालेख (७१×४३ से.मि.) छ ।

**(च) छत्रचण्डेश्वर मूर्ति ।**

भुवनभक्तेश्वर मन्दिरको छेउमा विष्णु मूर्ति भएको देवल छ । देवलको दक्षिणतिर इँटाको पिठिकामा पश्चिमाभिमुख छत्रचण्डेश्वरका तिनवटा मूर्तिहरू (४० × २३ से.मि., ९३ × ३७ से.मि., ४२ × २२ से.मि.) छन् ।

**जीर्णोद्धार गर्नुभन्दा अगाडि मन्दिरको अवस्था :-**

- तेश्रो पेटीको बुट्टे इँटाहरू प्रायजसो सवै टुटे फुटेका थिए ।
- दक्षिणतर्फको चारवटा थामहरू काठको हुनु पर्नेमा इँटा सिमेन्टबाट बनेको थियो ।
- प्रदक्षिणा पथको दलिनहरू धेरै जसो किराले खाएको, मक्किएको र नराम्रो अवस्थाका थिए ।
- १९९० सालको भुकम्पछि मन्दिरको जीर्णोद्धार गर्दा झिंगटीको छानाको ठाउँमा जस्ता छाना राखेको पाइयो ।
- उत्तरतर्फ नागवेली बुट्टाको ठाउँमा सादा इँटा राखिएको र केही नागनागिनी मूर्ति टुटे फुटेको तथा हराएको पाइयो ।
- मन्दिरको लामो गर्भगृहको सतह उबडखाबड परेको थियो । संभवत ढोकाको डिला काठ बीचको शिखरको बोझले धसिएको थियो । यसले गर्दा दायाँको शिखर (पश्चिम पट्टिको) पनि माझतिर केही ढल्कन गएको देखिन्छ ।

- पेटीमाथिका चौबिसवटा थामहरूमध्ये उत्तर तथा दक्षिण तर्फका थामहरू आफ्नो ठाउँबाट सरेको स्पष्ट देखिन्थ्यो ।
- दक्षिणतर्फको माझको ढोकाको दुवैतिरको गारो शिखरको बोझले गर्दा फुटी सकेका थिए ।
- गर्भगृहको चारैतर्फको गारो कँही भुक्क उठेको, कँही ढोकाको डिला काठ धसिएको, कँही काठको चौकोसहरू आफ्नो स्थानमा नभएका देखिन्थ्यो । यसले गर्दा मन्दिरको पूर्वतर्फको ढोका बाहेक अन्य ढोकाहरू खोल्न र बन्द गर्न नसकिने अवस्थामा थिए ।
- गर्भगृहमा भएका काठका थामहरू पनि केही फेर्नु पर्ने अवस्थामा थिए ।
- छाना वरिपरिका केही टुँडालहरू र कुँशल हराएका थिए ।
- शिखरहरूमा पनि कतै कतै चर्किएको र झारपात बिरूवा उम्रिएका थिए ।

**जीर्णोद्धारको समयमा गरिएका मुख्य कार्यहरु :-**

- तेश्रो पेटीमा लगाइएका बुट्टे इँटाहरू पुरानो सबै झिकेर नयाँ लगाइएको ।
- पेटीमाथिको चौबिसवटा थाम रहेको लाकासिं काठ खोलेर हेर्दा कामै नलाग्ने गरी कुहिएको फेला परेको हुँदा सबै नयाँ फेरेको ।
- थामहरू फाँटिएको ठाउँमा मिलाएको, दक्षिणतर्फ नयाँ काठका चारवटा थामहरू फेरेको तथा थाम र गारो बीच (प्रदक्षिणा पथ) का सवै दलिनहरू नयाँ राखेको ।
- गर्भगृहको बाहिरी र भित्री दुबै गारो स्क्रीनिङ्ग (Screening) गरी पुन दचिअप्पा लगाएको ।
- उत्तरतर्फ नागवेली बुट्टा र हराइरहेको ३ वटा नागनागिनी मूर्ति राखेको ।
- आठवटै ढोकाहरू बिग्रेको ठाउँमा मर्मत गरी ढोकाको लाकासिं फेरेको, ढोकाको दायाँ बायाँ रहेका ट्वाकल सिंहहरू मध्य आठवटा नयाँ राखेको ।
- गर्भगृहको भूँइ र प्रदक्षिणा पथ दुबैमा सतह मिलाई तेलिया इँटा छापेको ।
- गर्भगृहभित्रको गारोमा पनि बीसवटा काठको थाम देखिएको थियो । तर गारो भत्काउने क्रममा उत्तर र दक्षिण ढोकाको दुई दुई कुनामा गरेर अरू चारवटा थाम भेटियो । यी थामहरू पहिले नदेखिने गरी गारोले छोपिएका थिए । अहिले भने केहि भाग देख्न सकिन्छ । गर्भगृहको गारो र थाममा माथिका तिन शिखरको भार समानरूपमा पर्नु पर्नेमा थामले चाँही कुनै भार नलिएको तथ्य थाममुनि कतै ढुङ्गा वा इँटा नभेटिई, माटो मात्र फेला पऱ्यो । यसले गर्दा शिखरहरूको बोझ गारोमा मात्र अत्यधिक पर्न गई गारोहरू भुक्क भएको, चर्किएको र फुटेको हुन सक्छ । यसै कारणले गर्दा पश्चिमपट्टिको शिखर माझ तिर केही ढल्केको जस्तो देखिन्छ । बाहिर पेटीमाथि चौबिस वटा थामहरू भए जस्तै भित्र गर्भगृहमा पनि चौबिसवटा थामहरु भेटियो । गर्भगृहमा देखिने बीसवटा थामहरूमध्ये सोह्रवटा नयाँ फेरिएको छ । चारवटा चाँही पुरानो जोडेर राखिएको छ । अहिले बिसवटै थामहरू मुनि ढुङ्गाहरू राखिएका छन् ।

करीब ७५० टन बोझ भएको शिखरहरूलाई नभत्काई गर्भगृहको गारो, दलिन तथा थामहरू फेर्ने कार्य ज्यादै जटिल र सम्वेदनशील थियो । तसर्थ त्यस्तो जीर्णोद्धार कार्यलाई सफलतापूर्वक सम्पन्न गर्ने जे.वि. निर्माण सेवाका श्री काजीराम अधिकारीलाई साधुवाद दिन चाहन्छु ।

- तिनवटै शिवलिङ्गको जलहरि उत्तरतर्फ फर्केको छ । जलहरिबाट पानी जाने निकाश (प्वाल) पनि तिनवटैमा पत्ता लागेको हुँदा पानी जम्ने समस्या छैन् ।
- कृष्ण देवतासँग सम्बन्धित टुँडाल पाँचवटा र कुँशल दुईवटा हराएको हुँदा नयाँ बनाई राखिएको छ । त्यस्तै जस्ताको छाना हटाई पुरानै स्वरूपको झिंगटी छाना छाइएको छ । छानाको भिरालो कम हुने हुँदा छाना माथिको भूईँलाई दुई सल माथि उठाइएको छ ।
- सम्पूर्ण काठका ढोका, थाम, कुँशल, टुँडाल तथा सुन मोलम्वाको गजूर र त्रिशुल आदिको रसायन उपचार गरिएको छ । त्यस्तै शिखरहरूको चर्किएको भाग मर्मत गर्ने, झारपात विरूवा मार्न रसायन राख्ने तथा शिखरको माथिल्लो भाग र देवलमा चुना पोत्ने कार्य पनि गरिएको थियो ।
- राणाकालीन मन्दिरहरूमा आफ्नै मौलिक शैलीको बास्तुकलाले युक्त बम्बीर विकटेश्वर महादेव मन्दिरको जीर्णोद्धार कार्य आ.व. २०५८/५९ मा सम्पन्न गर्ने लक्ष्य लिई श्री संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय, नीति, योजना तथा पूर्वाधार विकास महाशाखाले पुरातत्व विभागलाई प्राविधिक रेखदेखको लागि जिम्मा दिएको थियो । उक्त कार्यको परियोजना प्रमुख भई जिम्मेवारी वहन गर्ने मौका यस पङ्तिका लेखकलाई प्राप्त भएको थियो । यस्तै इञ्जिनियरिङ्ग कार्यको लागि रमेश थपलिया र फोटोग्राफीको लागि ओम श्रेष्ठ खटिएका थिए । मन्दिरको जीर्णोद्धार कार्य रू.२०,१७,५६१।९८ को लागतमा सम्पन्न गरिएको थियो ।

बम्बीर विकटेश्वर महादेव मन्दिर क्षेत्रमा थुप्रै महत्वपूर्ण स्मारकहरू छन् । तिनीहरूको संक्षिप्त जानकारी दिइएको छ ।

चौघेरा सत्तल - मन्दिरको चौघेरा सत्तल हाल ज्यादै जिर्ण अवस्थामा छ । दक्षिणपट्टिको सत्तलको प्रवेश गर्ने स्थानको दायाँ बायाँ दुइवटा घण्टा छ । यहाँ १९०९ सालका अभिलेख पाइन्छ । यो सत्तलको छाना तथा भित्रपट्टिको थामहरू कुनै पनि बेला खस्ने अवस्थामा छ । उत्तरतर्फको सत्तलको अवस्था पनि त्यति राम्रो छैन । पूर्वतर्फको सत्तलको झ्यालहरू छैन् । त्यस्तै पश्चिमतर्फको सत्तलको छाना जस्ता राखी जोगाइएको छ भने झ्यालहरू पनि नयाँ राखिएको छ । तर, १९९४ मा प्रकाशित टेकु थापाथली रिसर्च ग्रुपको रिपोर्टमा यी सत्तलहरूको विस्तृत नक्साहरू भएकोले पुरानै रूपमा संरक्षण गर्न सकिन्छ । वि.सं. १९१० देखि प्रत्येक वर्ष इन्द्रजात्रामा ठडाइने लिङ्गो बंबीरविकटेश्वर मन्दिरलाई दिने चलन चलेको पाइन्छ ।

**इन्द्रभक्तेश्वर महादेव मन्दिर र सत्तल :-**

यो मन्दिर बम्बीर विकटेश्वर मन्दिरको पश्चिममा पर्दछ । पूर्वाभिमुख यो मन्दिरको चारैतर्फ प्रस्तरको छेपु भएको कलात्मक ढोका छ । यो मन्दिरको पेटी तिनवटा रहेको छ । इँटा, ढुङ्गाले बनेको तथा घण्टाकार छाना भएको यो मन्दिर एक तले छ । मन्दिरको पश्चिममा प्रस्तरको बसाहा र उत्तर पूर्वमा छत्रचण्डेश्वरको मूर्ति छ भने उत्तरतर्फ झिंगटीको छाना भएको सत्तल छ । सत्तलको पश्चिमपट्टिको छाना भत्की सकेको हुँदा संरक्षण गर्नु पर्ने देखिन्छ । तर २०६० सालको वर्षातले सत्तलको अवस्था झन नराम्रो पारेको छ । यो मन्दिर वम्वहादुरको कान्छा छोरा इन्द्र भक्तेश्वरले १९२१ सालमा बनाएको विवरण हाल सँगैको नारायण मन्दिरमा रहेको घण्टाको अभिलेखवाट थाहा हुन्छ ।

**लक्ष्मीनारायण मन्दिर र सत्तल :-**

यो मन्दिर इन्द्र भक्तेश्वर महादेवको दक्षिणतर्फ पर्दछ । पूर्वाभिमुख यो मन्दिरको प्रवेशद्वार प्रस्तरको छेपु भएको कलात्मक छ । घण्टाकार छाना भएको तथा इँटा, चुना र सुर्खीले निर्माण गरिएको यो मन्दिरको पनि तिनवटा पेटी छ । यसको पश्चिमतर्फ झिंगटी छाना भएको, कलात्मक काठका थाम तथा झ्यालहरू भएको सत्तल छ । मन्दिर र सत्तल जीर्ण अवस्थामा पुगेको पाइन्छ ।

**पञ्चलिङ्ग महादेव मन्दिर :-**

यो मन्दिर लक्ष्मीनारायण मन्दिरको पूर्वतर्फ र बम्बीर बिकटेश्वर मन्दिरको दक्षिण पश्चिममा पर्दछ । गोलाकार वाँस शैलीको यो मन्दिरको बास्तुकला अनौठो र कुनैसँग मिल्दैन । यसको चारैतर्फ छेपु भएको कलात्मक ढोका छ । प्रत्येक ढोकामाथि गुम्वज आकारको बुट्टा पाइन्छ । पूर्वाभिमुख यो मन्दिरमा पनि तिनवटा पेटी छ । इँटा, चुना र सुर्खीले बनेको यो मन्दिरको पश्चिमपट्टि प्रस्तरको बसाहा छ । यो मन्दिर गुमान सिं कार्कीले बनाएको भन्ने छ ।

**जगन्नाथ मन्दिर :-**

जगन्नाथ मन्दिर बम्बीर बिकटेश्वर मन्दिरको दक्षिणतर्फ पर्दछ । पश्चिम फर्केको यो मन्दिरको प्रवेशद्वार प्रस्तरको छेपु भएको कलात्मक छ । प्रवेशद्वारको दायाँ बायाँ प्रस्तरका सिंहहरू छन् । मन्दिरमा दुईवटा पेटी छ । यसको गर्भगृहमा कृष्ण, सुभद्रा र बलरामका प्रस्तर मूर्तिहरू छन् । यो मन्दिरको गर्भगृह चौकोर आकारको रहेको छ । यसै माथि शिखर बनाइएको छ ।

**शिव मन्दिर :-**

यो मन्दिर जगन्नाथ मन्दिरको पूर्वतर्फ रहेको छ । मन्दिरको चारैतर्फ प्रस्तरको कलात्मक छेपु भएको ढोका छ । तर यसको मुख्य प्रवेशद्वार भने दक्षिणतर्फ रहेको छ । मन्दिरमा तिनवटा पेटी छ । इँटा, ढुङ्गा र सुर्खीले बनेको यो शिव मन्दिर एक तले छ ।

**भुवनेश्वरी महादेव मन्दिर र सत्तल :-**

यो महादेव मन्दिर शिव मन्दिरको पूर्वतर्फ पर्दछ । दक्षिणाभिमुख यो मन्दिरमा पनि चारवटा ढोका पाइन्छ । हरेक ढोकामा प्रस्तरको कलात्मक छेपु भेटिन्छ । यो मन्दिरमा पनि तिनवटा पेटी छ । यसको घण्टामा १९२५ साल कुँदिएको छ । मन्दिरको पश्चिममा प्रस्तरको बसाहा, उत्तरमा धातुको त्रिशुल र पूर्वमा छत्रचण्डेश्वरको मूर्ति छ । इँटा, ढुङ्गाले बनेको तथा घण्टाकार छाना भएको यो मन्दिर एक तले छ । यसको उत्तरतर्फ कलात्मक झ्याल तथा थामहरू भएको झिंगटी छानाको सत्तल छ । सत्तलमा १९२४ सालको शिलापत्र ( ११९x५७ से.मि.) पनि छ । सत्तलको छाना खसेर तथा घामपानीले गर्दा कलात्मक झ्याल, थाम तथा दलिनहरू नष्ट हुन थालेकोले यथाशीघ्र संरक्षण गर्नु पर्ने देखिन्छ । तर २०६० सालको वर्षातले सत्तलको झ्यालहरु कामै नलाग्ने गरी भत्किसकेको छ ।

**राम-सीता, नरसिंह मन्दिर र सत्तलहरु :-**

यो मन्दिर बम्बीर विकटेश्वर मन्दिरको पूर्वपट्टि रहेको बाह्र रोपनी बगैंचाको दक्षिणतर्फ पर्दछ । बागमती धाटमा रहेको दुईवटा सत्तलको बीचमा गुम्वज आकारको मन्दिर छ । घाटमा पश्चिम फर्काएर प्रस्तरका ठूलो हनुमानको मूर्ति राखेको हुनाले यसलाई हनुमानघाट भन्छन् । मन्दिरको उत्तरतर्फ रहेको

बाह्र रोपनी भन्दा बढीको बगैंचा घरेलु शिल्पकला बिक्री भण्डारलाई 'प्रोसेशिङ्ग प्लान्ट' को लागि भनेर गुठी संस्थानले विक्री गरेको, तर घरेलुले राष्ट्रिय वाणिज्य वैंकलाई बेची दिएको हुँदा मुद्दा परेको थाहा भयो । कीर्ति राख्ने उद्देश्यले राखिएको गुठीको जग्गा मन्दिरकै नाममा फिर्ता हुनु पर्ने देखिन्छ ।

**राधाकृष्ण सत्तल :-**

हनुमानघाटदेखि यसको पूर्वतर्फको जग्गाको अन्तिम कुनामा राधाकृष्ण सत्तल भएकोमा अहिले भग्नावशेष मात्र बाँकी रहेको देखिन्छ । हाल यसै सत्तलवाट बाटो खोली उत्तरतर्फको *FNICC* भवनको सडकमा जोडिएको छ । राधाकृष्णको मूर्ति हनुमानघाट स्थित सानो देवलमा राखिएको छ । यो सत्तलदेखि पचलीघाटसम्म ५२ वटा गुम्वज भएको लामो पर्खाल छ । यहाँ कपडा फेर्ने आदि काम गरिने हुँदा यसको धार्मिक तथा सांस्कृतिक महत्व रहेको छ । यसलाई कयताघाट पनि भन्छन् ।

अन्तमा जीर्णोद्धार कार्यमा सहयोग पुऱ्याउनु हुने संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय, पुरातत्व विभाग तथा बम्बीर विकटेश्वर गुठी व्यवस्थापन समितिका अध्यक्ष श्री राजविक्रम राणालाई हार्दिक धन्यवाद दिन चाहन्छु ।

**सन्दर्भ ग्रन्थहरु :-**

डा. कार्ल पुशा -१९७५ - काठमाडौं भ्याली, द प्रिजर्भेशन अफ फिजिकल इन्भाएरोमेन्ट एण्ड कल्चरल हेरिटेज प्रोटेक्टिभ इन्भेन्टोरी- श्री ५ को सरकार, आवास, विल्डिङ्ग तथा भौतिक योजना विभाग, भियना ।

डा. जगदीश चन्द्र रेग्मी -२०३३ - शाहकालीन कला र वास्तुकला - साझा प्रकाशन, पुल्चोक ।

जया कार्की - २०३६ - राणाकालीन नेपालको ऐतिहासिक घटनावली - मानव स्रोत विकास अनुसन्धान केन्द्र ।

मधुपर्क - २०५०, वर्ष २६ अङ्क ३, पूर्णाङ्क २८९ साउन, गोरखापत्र संस्थान काठमाडौं ।

द टेकु थापाथली रिसर्च ग्रुप रिपोर्ट १९९४ (जोन स्याण्डेय कन्सल्टयाण्टवाट तयार गरिएको)

## १. बम्बीर विकटेश्वर मन्दिरभित्र भएको ताम्रपत्र

| श्री वागमति | श्री वंवीरविकटेश्वर महादेव | श्री कृष्ण वलभद्र सुभद्रा | श्री पशुपति | श्री गुह्येश्वरी | लुमडी | श्री हनुमान | श्री महिला साहेवज्यू |
|---|---|---|---|---|---|---|---|
| १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ |
| श्री ५ सर्कार | | | | | | | |

स्वस्ति श्री गणेशायनमः ॥ ॥ आसिन्नेपाल देशेत्थुदयगिरि गतः सूर्य वभ्द्राजमानो धीरीवीरोहयुधरोर राजित कुंवर रधातिमा श्चातिश्रुरः ॥ पुत्रस्तस्यातिश्रुरोर्जुन दूवसमरे शत्रु हत्ता महात्मा श्री

दुर्गा भक्ति युक्तो नृपति हितकरो वालनर्सिंहवीर : १ तदात्मजोमत्रिवरो हयुदारो वंवाहदुर : प्रथित पृथिथाम ॥ स्व वाहु वीर्यणावि संडितारिः स्व धर्म सपाल नकर्मवारी २ श्री वाग्मत्युत्तरे कलेशिव

सायुज्यकाम्य या ॥ स्थापितो विधिवत्तेन वंवीर विकटेश्वर : ३ नदीश्वर स्यार्चन यक्षेत्रारापुत्सर्जितानिवै ॥ तस्याधि कारिण संम्वक संदृष्द्वा ताम्र पत्रके. ४ नित्य नैमित्यका दीनिवक्ष्यमाणा । निया निव ॥ ता

निकर्माणी कुवीततत्तत्कालेय थाविधि ५ रामेन्दु नन्द धरणीमित विक्रमेद्वे १९१३ वस्वदि पर्वतमही प्रमितराकाव्दे १७७८ ॥ संकल्पि तानि लिखिता नितुक्षेत्रकाणि आय व्ययादिसहिता निहि ता

म्र पत्रे : ६ ॥ ॥ अथ देश भाषा ॥ ॥ श्री शाके १७७२ विक्रमादित्ये सम्वत १९०७ नेपाली सम्वत ९७१ साल मिति माघ श्रुदि ७ रोज ६ का दिन श्री मद्राज कुमार कुमारात्मज श्री रणजीत कुवर राणाजीका नाति

श्री मद्राजकुमार कुमारात्मज श्री वालनरसिंह कुवर राणाजीका छोरा श्री मद्राजकुमार कुमारात्मज श्री प्राइम मिनिष्टर याण्ड कम्याण्डर इन चिफ जनरल वंवहादुर कुँवर राणाजीवाट १ का ती

र मा स्थापना भयाका २ र ३ का नित्यनैमित्तक पुजा र वर्षवंधन पर्व पर्वका पूजा औ रोजिन्दा सदवर्त र देवालय चौघरा धर्मशाला घाट वघैचा विग्रा भत्क्यामा मर्मत गर्ना निमित्त र

४ प्रिति गरी हामिले चढायाको मुकुट धुनाके औ ५ ६ ७ का पुजा समेत र गुठियार कामदार पूजाहारि टहलुवा बाजा बजाउन्या घाट चोक बढान्या गैह्र तपसिल बमोजिमका षर्च गर्ना

निमित्त सम्वत १९१३ सालका वाली देषी हाम्रा किनुवा विर्ता : तपसिल वमोजिमका षेत १९/१६/४ गुठि राषि दिन्यु: येसै षेतका पैदावार वालि गैह्र तपसिल वमोजिम दरले विक्री गरि

साल वसालका गुठियारले वमोजिम तपसिल षर्च चलाई बाँकी रह्याको जगेरा राषनु गुठिमा दरियाका षेतको आम्दनी षसोषास जस्ताको तस्तो

असुल तहसिल गरि सालवसाल हामि र हाम्रो

- संतानसँग वही वुझाइ फारषती लिनु तपसिल वमोजिमको षर्च कत्ति नघटाइ गुठिको काम चलाउनु येस गुठिमा जसले आम्दानी दवाइ तपसिल वमोजिमको षर्च नचलाइ लोभानी पा
- पानि गर्ला तसलाई पंचमहापातक लागला

(बायाँ)

**तपसिल**

आम्दानि ज्मा १६ गडि पैसा रुपैया ३७८५ ॥२

असामि .. पेत रो. धान चावल गहु टिका भेट चार्दाम ठेकि परालक ध्यूषनि ... असामि षेत रो. धान चावल गहु टिका चार्दा परा ध्यषनि भेट ठे. लक मो. रू. २० गं १६ गं.

भादगाउ मोरू २० गं. १६ गं. भादगाउँ

८ को लुकुंडोल ६०/- – x – ६४।४।३ ॥ . १६। . । ६ – x – ॥ ' ॥ – ३६०ऽऽ २४ ॥ x x x

मिलाछे भाजुविर झागलसी

त किन्याको वलाको – २ । । – x – २ । १० । – । १२ । ४ x – ' – x – १ । – x – x

साहेव सिं प्रधांनांगसित किन्या

को विडोलस्मेत – १० । । – x – १० । १० । – २। ९। ४ – ' – x – ५ । – x – x

महंत देवनारानगिरि सितकि

न्याको लुकुंडोल गाषु – ७ । । – x – ७ । १० । – १ । १३ । ४ – x – '' – x – x – x –॥'''

तमाधि टोलको चुकुढि वाडासि

त किन्याको – ६ – x – ६ । त्र्य । १२ । – x – '' – x – x – x – ॥

तेषा पुषु टोलको लक्ष्मिनारान दै

वज्ञ सित किन्याको षुपांमिलि – २ – x – २ । १० । – । १० । – x – ''– x – १ – x – x

पौमाटोलको धिधकुँसित किन्या

को गूङ – ५ – x – ५। . – १। . – x – '– x – २ ॥ – x – x

भल्लाछें टोलको भाजुविर देव ना

धुसित किन्याको – ८ । – ९ । . – ४। ५। . – १ । ६ । . – x – ' – x – ३ – x – x

वलाटोल चुकुधन भजगोवि

दसित किन्याको सिलष – २ ।[३] ॥. x – २ । ८ । ७ – । १२ । . – x – ' – x – १ = । – x – x

सिवलक्ष्मि र जपुतनी सित कि

न्याको वाकोजो र वसिवु – १ – x – १ । . – । २ । . – x – ' – x – x – x – ॥

हरिष्याकासित किन्याको गुं

डु दोका थौ – १ ॥ – x – १ । १० । . – । ३ । . – x – ' – x – x – x – =

धजुं रायसित किन्याको कुडो

ल स्मेत – ६ । । । – १ । १० । . – ६ । ५ । . – १ । ५ । . – x – ' – x – x – x – ॥''॥

कासि धर्कुसित किन्याको

धातु गाषु – ४ – x – ४ । १० । . – १ । ० । . – x – ' – x – x – x – ॥

भाजुवीर डोये सित किन्याको

जिस्वा वोगाल – १ । । . – २ । १० । . – x – । ६ । . – x – x – x – x – =

जहरसिं दैवज्ञसित किन्याको

ताकिला – २ – x – २ । . – । १० । . – x – ' – x – x – x – ।

चन्दुविर मलेका सित किन्याको

कुंसुलि – २ ॥ . – x – २ । १५ । . । ६ । . – x – ' – x – x – x – । =

धलाछें विश्नारान जुवालसित

किन्याको विडोल स्मेत – १० – २ । १५ । . – ८।१०। . – १ ।१८। . – x – । – x – x – x – १'''

तिंडोल नराधोज थापासित कि

न्याको द्वागाचा तनावु – २ । – x – २ । ५ । . – । ९ । – x – '' – x – x – x – । . ॥ .

चोछे तेज लक्ष्मीसित किन्याको

हाकुभुटि मुगथौं – ४॥ . – x – ४ । १५ । . – । १८ । . – x – '' – x – x – x – ॥''॥

तलाछे जवर साषकर्मि सित
किन्याको तवधे – १ – x – १ । . – । ५ । – x – ′ – x – x – x – ॥ .
तेषा डोल लक्ष्मी सुंदर माकलसिं
त किन्याको भुंडोल – ६ – x – ७ । . १ । ८ । . – x – ′ – x – x – x – ॥′′
कटौज्या वहम्यभिधौलान नरसिं
सिन किन्याको गुंदु – ४ – ८ । – x – । १२ । – x – ′ – x – x – x – ॥
व्रहमपुरि राम लक्षेमन पन्ट
सित किन्याको तया स्मेत – ६ । . – x – ६ । १० । . – १ । १२ । ४ – x – ′′ – x – २ – x – x
चासुषेल टोलको विंनारानकासु
ला सित किन्याको लुकुंडोल – १ ॥ – x – १ । १० । . – । ७ । ४ – x – ′ – x – ।′′ . – x – x
न्हाकंडोल ऽऽ वीर थापा इन्द्र वि
र थापा सित किन्याको गोरे – २ – x – २ । . । – । १० । – x – ′ – x – ॥ . – x – x
लास्को ढोका इपाछे टोल वष्न्या चक्र
राज उपाध्या भाजु स्मेत जना ४
सित किन्याको तप्पा ६ ॥ मध्ये – २ – x – २ । . – । १० । . – x – ′ – x – ॥ – x – x
काठमाडौं दुगंवहिलका तेजानन्द
अचारसित किन्याको नाराहिटी
साकोना – २ – x – २ । . । – । ५ । – x – ′ – x – x – x – ॥
ढोषा काठमाडौं वस्न्या महाविर चौ
धरिसित किन्याको – ऽ – x – ५ । १५ । . – x – x – ′′ । । – x – x – x – ॥ ′′′
थानकोट सुवासभुलाल पाध्या
सित किन्याको नागिनडोल स्मेत – २७ – २०।१०। – x – ४ । ८ । – x – ′′′ – x – १ ॥ . – x – x

(दायाँ)
भादगाँउ
शिवराम छिपिसित किन्याको
वडोल नैषेल – ५ – x – ५ । – १ । . x – ॥ – x – x – x – ॥′′
मल्लाछे जितनसिं सित किन्या
को सिन्हाडोल ठाठु – ८ – १४ । . – x – १ । ५ – x – ॥ – x – x – x – २
घटषा टोलको तेजवीर हे
ल सित किन्याको यावु – ३ ॥ – x – ३ । १० । – । १७ । ४ – x – ′ – x – x – x – ।′′′
चोछेटोलको रामदाससित
किन्याको वलाको – ५ – x – ५ । ५ । . – १ । ५ – x – ′ – x – x – x – ॥′′′
टुषालाछे टोल विश्वनाथ भ
ट्टसित किन्याको चषु स्मेत – ७ – x – ७ । . – १ । १० । ४ – x – । – x – x – x – ॥ ′′
षरिदार पृथिधर पाध्यासित कि
न्याको लुकुंडोल स्मेत – २९ – x – २९ । . – ७ । . । ७ – x – ॥′ – x – ९ ॥ . ३ – x – x
षरिफा रघुनदसित किन्या
को षापि स्मेत – १० – १८ । १४ । – x – १ । ६ । . – x – ′′′ – x – ४ । . – x – x
षौमाटोल गौरी नारान प्रधा
नांग सित किन्याको तपास्मेत – १६ ॥ – x – २० । ४ । . – ३ । १४ । – x – ॥′ – x – x – x –२॥
तुछे महत्रा चन्दुविर मलेका
सित किन्याको तवोगाल – २ ॥ . – x – २ ॥ ५ । . – । १३ । . – x – ॥ – x – x – x – । . ॥
किस्नवीर चित्रकारीसित कि
न्याकों वंति सिलष –११ ॥ . – x – ११ । १० । . – २ । ११ । . x – ॥ – x – ६ – x – x
लक्ष्मिनारान गोषेन सित कि
न्याको दौषा – २ – x – २ । ५ । . – । ४ । . – x – । – x – x – x – ।′
रूङनाषन्नसित किन्याको

आलावु – २ – x – १ । ५ । . – । ५ । . – x – । – x – x – x – ′′॥
जित्मान प्रधानांगसित किन्या
को कुपाधालाषुसि –३ ॥। . – x – ३ । १५ । . – । १९ । . – x – ॥ – x – x – x – ।′′′ ॥
जुजुमनि कायेष्ठ किन्या
को तवोगा – । . – x – । ५ । – । १ । २ । . – x – । – x – ॥ – x – x
कोलयाको लक्ष्मिनारान वृहस्प
ति दाहालसित किन्याको मासिडोल – ११ – x – ९ ।१०। . – १ । ६ । ४ – x – । – x – x – x – ।′
आछे लक्ष्मिनर सिं सित किन्याको
माकजाला मिलि – १ ॥ . – x – १ । ५ । . – । १ । . – x – ॥ – x – x – x – ॥ . ॥
जयेनारान सिन्केयहि सित
किन्याको दौषा – २ – x – २ । ५ । . – । ६ । . – x – । – x – x – x – ।′
राजिवल दाहालसित किन्याको
सुदंरी डोल आध्याटार – ७ ॥ – ९ । – x – । ३ । . – x – । – x – x – x – ॥। .
ठिमी वहन्या भिमदत्तसित कि
न्याको वाहावुघाट – १ – २ । १० । . – x – । ५ । . – x – । – x – x – x – ॥
काठमाडौं चिकमुगल वस्न्याका
सिरामसित किन्याको आथौ – २ – x – २ । . – । ८ । . – x – । – x – x – x – ।
कोलपाकोटको वहस्न्या जना
रदन दाहालेसित किन्याको
भेनासिथली स्मेत – ६ – ७ । ५ । . – x – x – x – ॥ – x – x – x – ॥।
कोलाछे मनिमाधौ प्रधांनां
गसित किन्याको गुदुचोवु – २ ॥ – ५ । . – x – । १५ । – x – ॥ – x – x – x – ॥।
नारान किष्न तुतुमान सित कि
न्याको वसिवु – १ – x – १ । २ । ४ – । ५ । ५ – x – । – x – x – x – ।
गछेंला नरसि फोजुसित कि
न्याको भादा टोल कासांको – ४ ॥ . – x – ४ । ५ । . – १ . । १ । . – x – । – x – x – x – ॥′
अडैनी त्रिपुरादेवि सिवप्रिया
देवि देव कुमारी देवि सायुको
ब्रानी सित किन्याको लुकुडोल – ४० – x – ५५ । . – १५ ।. – x – । . – x – x – x – ४०
काजि दिर्घसि भंडारीसित कि
न्याको पाटन ढावाषेल – ३६ – ४ । . – २५ । . – ३ । १५′ – ।′ . – x – x – ३′′ – x
तौलुछे वस्न्या तेनर सिं वाँडा
सित किन्याको तेयोगाल – ३ – x – २ । १० । . – । १० । . x – । – x – ॥ . – x – x
१४ साल श्रावणवदी रोजमा
९ वटा वकस भै आयाको पा                                        तेल दरूँवासुकुल
टन वाहफल सेराका षेत – ५० – x – ५८ ।८। – ११ ।४। २ – ।१५। ५ –॥′′ ४ ॥′′ – ५९ ॥। x – x
ददांमु
ताके बिक्री वमोजिम दर ज्मा १६ गंडि रू. –                                        ३७८५ = ॥ २
जिनसिको मो रू २५४६ ॥=॥ १ पैसा रू ३१ । ज्मा रू २५७७ ॥। = ॥ १ के २२ गंडि दरले रू–३५३२॥।=॥
चामल मुरी –४३५।१३।१ के दर ।४।४ ता के मो रू–१९३६≡॥। ३ गहु मुरि १०८।१९।१ के दर ।६ ता क मो रू–३६३ ′′′ ।
धान मुरी –१०९।६।६ के दर ।९। ता के मो रू –२४३ ≡२ पराल कहित्र ३६०ऽऽ दर कहित्र ९० के मो रू १
तेल पाथी–।१५।५ दर पाथि १ के रू २ ता के पै रू –३१ ।
ता के मो रू            ४३ ।
नगदि मो रू – १२४९।३ पै रू ८१॥ = ॥२ ज्मा रू २०५ रू ॥ ≡ के २२ गंडि दरले रू – २५२ ≡२
घ्यू षानि रू – १९० ॥। ′′′ ॥३ चार्दाम ठेकि २० गंडि रू टडा के यै रू – १९० । १
मो रू – १२४९।३ करूवा सुकुल को । पै । रू (यै) । रू ४ ॥′′′
२० गडि रू ३′′ के पै रू – ३ ॥। ′′ ॥
१६ गडि रू – ६३९ ॥।
ये मध्ये षर्च–            ३४८३॥।′′॥
– २ – तर्फ के ज्मा रू –३३३५ ′′′ ॥।३

